

# ऐतिहासिक थिमि

(Historical Thimi)

- राजेन्द्र तूबन्जाः श्रेष्ठ

थिमि महोत्सव-२०६१ को उपलक्ष्यमा प्रकाशित

# ऐतिहासिक थिमि

## (Historical Thimi)


लेखक

राजेन्द्र तूबन्जाः श्रेष्ठ






प्रकाशक

मालेकुले, थिमि

(Malekule, Thimi)

प्रकाशक : मालेकुले, थिमि

प्रथम संस्करण : ५०० प्रति
: नेसं ११२४
: बुसं २५४८
: विसं २०६१
: ईसं २००४



सहयोग रू. : २५।-

आवरण सज्जा : नरेन्द्र श्रेष्ठ, यूनिभर्सल कम्प्यूटर इन्टरफेस

कम्प्यूटर सेटिङ्ग : ईन्टेल कम्प्यूटर सर्भिसेज, ६६३१२४२
यूनिभर्सल कम्प्यूटर इन्टरफेस, ६६३५८२३
मध्यपुर थिमि, शंखधरचोक

मुद्रण : पल्पसा जनरल सप्लार्यस
शंखधर चोक, थिमि, फोन ६६३३११६

---

ISBN : 99946-31-46-2

# प्रकाशकीय कलमबाट

मध्यपुर थिमि नगरको इतिहास, संस्कृति र पुरातात्विक सम्पदाको अध्ययन, अनुसन्धान गरी सत्यतथ्य विवरणलाई प्रचार र प्रकाशन गर्ने एवं यस नगरमा ऐतिहासिक सङ्ग्रहालय र पुस्तकालयको स्थापना गर्ने दीर्घकालीन उद्देश्य लिई चारजना साथी मिलेर २०५३ श्रीपञ्चमीको दिन "मालेकुले" संस्थाको स्थापना गरेका हौं । यस संस्थाले नगरक्षेत्रको इतिहास, संस्कृति र सम्पदासम्बन्धी अध्ययन गरी विभिन्न माध्यमबाट प्रकाशन गर्दै आइरहेका छौं । यसै परिप्रेक्ष्यमा मध्यपुर थिमि नगरबाट प्रकाशित पुस्तकको सङ्कलन गर्ने कार्य विगत ६ वर्षदेखि भइरहेको छ भने मध्यपुर महोत्सव २०५५, मध्यपुर थिमि प्रदर्शनी-२०५८ लगायतका विभिन्न समारोहमा ती सङ्कलित पुस्तकहरूको प्रदर्शनी समेत गर्दै आइरहेका छौं । त्यस्तै नगरभरिका विभिन्न ऐतिहासिक एवं सांस्कृतिक महत्वको सम्पदाहरु सूचीकरण गर्ने योजना अनुरुप तथ्याङ्क सङ्कलन गर्ने कार्य पनि विगत ६ वर्षदेखि अगाडि बढिरहेको छ । ती सम्पदाहरुको विस्तृत विवरण एवं अवस्थालाई समावेश गरी भविष्यमा पुस्तकको रूपमा प्रकाशन गर्ने लक्ष्य लिएका छौं । यस्तै लक्ष्यअनुरूप विगतमा "मालेकुले" नामक पुस्तक प्रकाशन गरिसकेका छौं भने यो प्रस्तुती दोस्रो प्रकाशन बनेको छ । प्रकाशनको यो क्षणमा मालेकुलेका संस्थापक सदस्य साथी स्व. सविन साहु श्रेष्ठको सम्झना स्वरूप उहांप्रति श्रद्धासुमन अर्पण गर्दछौं ।

थिमि सम्बन्धमा लेख्नुपर्दा जहिले पनि हामीमा एउटा जिज्ञासा उठिरहेको हुन्छ कि हाम्रो मौलिकता खोई, हाम्रो ऐतिहासिकता के हो ? हुनत थिमिको ऐतिहासिक उत्खनन गरेर धेरैले लेखिसकेको छ । कसैले औंठीको 'थि' जस्तो आकार भएकोले थिमि भनिएको भने, कसैले 'चेमि' (योद्धा)बाट थिमि भएको हो भने, कसैले थीगु मिं (आगोको ज्वाला)बाट थिमि भएको भने । यस्तै यस्तै तर्क र विश्लेषणको आधारमा थिमिको इतिहास प्रकाशित भइरह्यो । कथ्य र किंवदन्तीलाई छोडेर तथ्य र लेख्य सामग्रीको आधारमा थिमिको विश्लेषण खट्टिकरहेको बेला धेरै मेहनत र अनुसन्धानपछि तथ्यगत सामग्रीको आधारमा केही हदसम्म थिमिको इतिहास तयार गर्ने प्रयास सफल भएको छ । थिमि शब्दको विकासक्रम, थिमि नगरको सिमाङ्कन र यसको ऐतिहासिक पृष्ठभूमिलाई प्रस्तुत पुस्तकले स्पष्ट पार्नेछ भन्ने विश्वास लिएका छौं ।

अन्त्यमा पुस्तक तयार पार्नुहुने साथी राजेन्द्र तूवन्जा: श्रेष्ठलगायत डेक्सटपसम्बन्धी सम्पूर्ण कार्य गर्नुहुने इन्टेल कम्प्यूटर सर्भिसेजका रत्नकृष्ण श्रेष्ठ र यूनिभर्सल कम्प्यूटरलाई हार्दिक धन्यवाद दिन चाहन्छौं । पुस्तकको सम्पूर्ण खर्च व्यहोर्नु भई प्रकाशनलाई साकार पार्नुहुने ॐ शान्ति गीता पाठशाला, वामुने टोलका श्री सुरेन्द्रकृष्ण श्रेष्ठज्यूप्रति सहयोगको लागि सधन्यवाद सहित हार्दिक कृतज्ञता व्यक्त गर्दछौं । त्यस्तै थिमि महोत्सवको तयारीको सिलसिलामा यसको प्रकाशनले मूर्तरूप हुने अवसर जुटेकोमा महोत्सव आयोजक समितिलाई पनि धन्यवाद दिंदै प्रकाशकीय कलमलाई यही विश्राम दिन चाहन्छौं । धन्यवाद ।

अध्यक्ष
बाबुकाजी सा:छैं श्रेष्ठ
मालेकुले, थिमि

# सहयोगी बनोस् यो प्रयास

उपत्यकाका पुराना सहरहरूमध्ये थिमि पनि एक हो । अटुट सांस्कृतिक वैभव र गहिरो ऐतिहासिकताले यसको अध्ययन, अनुसन्धानलाई कौतुहलपूर्ण र चाखलाग्दो बनाउँछ । थिमिको बिस्का जात्रा (बत्तीस खतको सिंदुर जात्रा), जिब्रो छेड्ने जात्रा, दीपंकर जात्रा, भैरब नाच, यहाँको उच्चतम र अद्वितीय सांस्कृतिक नमूनाको रुपमा रहेको छ भने माटोको भाँडाकुँडा बनाउने, मुकुण्डो बनाउने परम्परागत शीपले यस नगरको ऐतिहासिक दक्षता प्रष्ट्याउँछ । प्राचीनताको कुरा गर्दा यो नगर लिच्छविकालीन बस्ती रहेको तथ्य प्राप्त सामग्रीबाट पुष्टि हुन्छ भने थेम्मृङ शब्दको आधारमा किराँतकालीन बस्ती हुनसक्ने अनुमान लगाउन सकिन्छ ।

यस्ता अनेकौं कौतुहलता र आकर्षणबाट प्रभावित भई धेरैले यहाँका विविध पक्षको अध्ययन गरी लेख प्रकाशन समेत गरेका छन् । त्यस्तै इतिहास अनुसन्धानका कतिपय पुस्तकहरूमा पनि यसको उल्लेख आउने गरेका छन् । तर अधिकांश प्रकाशित लेखहरू तथ्यपरक भन्दापनि किंवदन्ती र मनगढन्ते तर्कहरूलाई मात्रै आधार बनाई चर्चा गरिएको पाइन्छ । जसले गर्दा थिमि इतिहासलाई छोटयाउने मात्र नभई ऐतिहासिक महत्वलाई समेत हलुका बनाउँछ । अर्कोतर्फ यसको ऐतिहासिक पक्षलाइं समेटेर पुस्तक प्रकाशन अहिलेसम्म नभइदिंदा कतिपय अध्यता र अनुसन्धानकर्तालाई अर्साजिलो महसुस हुने गरेको छ । तसर्थ यस नगरको ऐतिहासिक गहिराइ र वैभवलाई खोंतलेर पुस्तकाकार गर्न सकेमा थिमिसम्बन्धी अध्ययन र अनुसन्धान गर्नेहरूलाई सहयोग हुनुका साथै समग्र नगरको इतिहास हरेकले बुझ्न सजिलो हुने परिकल्पनाबाट यस पुस्तकको सिर्जना भएको छ । अधिकतम ऐतिहासिक सामग्रीको समायोजन गरी पुस्तकलाई सकेसम्म तथ्यपरक बनाउने प्रयास गरिएको भएपनि कमिकमजोरी रहन गएको खण्डमा सुधारको निम्ति सुझाव र सहयोग बन्दनीय हुनेछ ।

अन्त्यमा, अध्ययनको दौरानमा सहयोग गर्नुहुने ज्ञानमुनी बज्राचार्य, बाबुकाजी साःछेँ श्रेष्ठ, रत्नकृष्ण श्रेष्ठ एव पुस्तक तयारीको सिलसिलामा सुझाव दिनुहुने धर्मसुन्दर बज्राचार्य, कम्प्यूटर टाइप र सेटिङ्ग गरिदिने युनिभर्सल कम्प्यूटर र इंन्टेल कम्प्यूटर सर्भिसेज साधुवादका पात्र हुनुहुन्छ । साथै पाण्डुलिपि अध्ययन गरी आवश्यक सुधारको निम्ति सहयोग गर्नुहुने श्रद्धेय गुरु काशिनाथ तमोटज्यूप्रति हार्दिक आभार प्रकट गर्दछु । त्यस्तै गरी कम्प्यूटरमा थन्किरहेको पुस्तकलाइं प्रकाशन गरी जनसमक्ष ल्याउन सम्पूर्ण आर्थिकभार व्यहोर्नुहुने साथी सुरेन्द्रकृष्ण श्रेष्ठज्यूको अतुलनीय सहयोगको लागि स-धन्यवाद दिन चाहन्छु । आशा छ, हरेक क्षेत्रबाट यस्तै सहयोग आउँदा दिनहरूमा पनि निरन्तर पाइरहनेछु । धन्यवाद ।

– राजेन्द्र तूबन्जाः श्रेष्ठ

नेसं ११२४, यँला

# ऐतिहासिक धरोहरबाट शुभ प्रेरणा

प्राचीन महत्व राख्ने कुनै पनि स्थानको धार्मिक, सांस्कृतिक र ऐतिहासिक अमूल्य सम्पदाका विषय वस्तुहरूको अध्ययनबाट महत्वपूर्ण ज्ञान, शिक्षा र प्रेरणा हासिल गर्न सकिन्छ। पुरात्तन कुराहरूको निर्माण र स्थापना त्यत्तिकै भएको हुँदैन त्यसका पछाडि अनेकौं ऐतिहासिक कुरा र रहस्यहरू रहेका हुन्छन्। जुन समयको अन्तरालपछि केवल परम्पराको रूपमा मात्रै चल्दै आएका हुन्छन् तर त्यसको वास्तविकता भने लोप भइसकेको हुन्छ। जुन कला, कृति र संस्कृतिलाई पूर्वजहरूले आफ्नो यादगारको रूपमा छोडेर गए त्यसमा उनीहरूले जुन भावोक्ति र रहस्य अंकित गरेर गएका थिए ती कुराहरूले दिन खोजेको ज्ञान र शुभप्रेरणालाई बुझ्न सक्नु वर्तमान मानव समुदायको प्रमुख दायित्व र कर्तव्य हो। ती गुम्बा, चैत्य, पाटी, पौवा, मन्दिर, सतल र अन्य कतिपय पुरातन महत्वका सम्पदाहरू कति मेहनत र परिश्रम गरेर निर्माण गरेका होलान्, कस्ता भाव र भावनाहरूलाई मूर्त रूप दिन खोजे होलान्, त्यसको महत्व आफ्नै ठाउँमा रहेको छ। त्यसबाट हामीले वर्तमानमा के कस्तो प्रेरणा र ज्ञान पाइरहेका छौं त्यो हाम्रो गुण, ग्राह्यता र बौद्धिक सोचमा निर्भर गर्दछ। कुनै पनि क्षेत्रको विकास एउटा ऐतिहासिक महत्व, लक्ष्य र उद्देश्य लिएर भएको हुन्छ। त्यहाँ त्यसका मौलिक संरचनाहरूले छाप र प्रभाव छोडेर गएको हुन्छ। ती बहुमूल्य निधिहरूको संरक्षण र सम्बर्द्धन गर्न सकेमा नै त्यो संस्कृति दिगो एवं दीर्घजीवी रहन सक्दछ।

यसैक्रममा त्यस्तो धरोहरहरूको खानी भक्तपुर जिल्ला पनि एक हो। त्यस जिल्लामा रहेको ऐतिहासिक धरोहरहरू र त्यसको खोज पनि अत्यन्त रोचक र इतिहासको लागि चाखलाग्दा विषय बन्न पुग्छ। त्यस्ता विषयको अध्ययन अनुसन्धानबाट नै मानिस ज्ञान, बुद्धिले सम्पन्न भई चरित्रवान, नैतिकवान भएर समाजलाई मार्गनिर्देशन दिई अगाडि बढाउन उत्प्रेरण गर्दछ।

ज्ञान, गुण, संस्कृति, संस्कार, सम्पदा र धरोहरहरूको अध्ययन, अनुसन्धान गरी प्रचारमा ल्याएर समाजलाई सत्यताबाट मार्गनिर्देशन गरी जीवनलाई सार्थक गन्तव्यतिर दोहोऱ्याउन प्रेरणा मिल्नेछ। परापूर्वकालमा पूर्खाले सिर्जेका सम्पत्ति, संस्कार, सम्पदा, ऐतिहासिक धरोहर, भजनमण्डल र समाजलाई सु-संस्कृत बनाउन

सकेमा नै जीवनलाई सार्थक तुल्याउन सकिन्छ । त्यस्तो सार्थकताका लागि आत्मसुधि र आत्मज्ञानले पनि प्रमुखता पाएको हुन्छ भने इतिहास, विज्ञान, चिन्तन र धर्मकर्मको संयोजक समन्वयले यसलाई अझै सजिलो बनाई दिनेछ ।

ती संयोजक समन्वयलाई हामीले यस "ऐतिहासिक थिमि" पुस्तकबाट पनि हासिल गर्न सकिन्छ । यस पुस्तकबाट ऐतिहासिक थिमिलाई बुझ्न चाहने विद्यार्थी, अनुसन्धानकर्ता, इतिहासकर्ता र ऐतिहासिकतालाई बल पुऱ्याउन यस पुस्तकलाई सक्दो सहयोग गर्ने निर्णयमा पुग्यौं । साथै यस पुस्तकले मध्यपुर थिमिको ऐतिहासिक महत्वलाई उजागर गरी पर्यटन प्रवर्द्धन गर्नुका साथै समाजको आध्यात्मिक, सांस्कृतिक चिन्तनलाई थप टेवा पुग्ने विश्वास पनि हामीले लिएका छौं । कुनै पनि मूर्ति र यादगार आफै बोल्दछ । ती मौन अभिव्यक्तिहरूले मुखरित गर्न खोजेको ज्ञान र शिक्षालाई बुझ्नका लागि हामीमा कति ग्रहण गर्न सक्ने क्षमता, कला र कौशल छ, त्यसमानै निर्भर गर्दछ । जसरी हिलोमा फुलेको कमलको फूलको महत्व बुझ्ने व्यक्तिले मात्र त्यस फूलको महत्व राख्दै हिलोको महत्वपूर्ण पक्षलाई अङ्गिकार गरी त्यस पुष्पबाट लाभान्वित हुन सक्दछ त्यसरी नै यस पुस्तकमा कुँदिएका ज्ञान र अनुसन्धानमूलक जानकारीबाट पाठकवृन्दहरू लाभान्वित हुनेछ भने अभिलाषा हामीले लिएका छौं ।

अन्त्यमा यस पुस्तकले थिमिको ऐतिहासिक अध्ययन र अनुसन्धानमा लागेका व्यक्तिहरूलाई थप सहयोग मिल्नेछ । साथै भोकालाई भोजन प्यारो भए झैं चरित्र निर्माणका लागि समाजमा ज्ञान, गुण दिने हाम्रो संस्थाले यो पुस्तक प्रकाशनमा गरेको सहयोगले हाम्रो सामान्य भोक मेटिएको महसुस भएको छ ।

**ब्रह्माकुमारी राजयोग सेवा केन्द्र**
**ॐ शान्ति गीता पाठशाला**
**वामुनेटोल, मध्यपुर थिमि**

# विषय सूची

सम्पूर्ण थिमिबासीहरूप्रति
सादर समर्पण !

- मालेकुले, थिमि

अध्याय-एक

# परिचय

## १.१ भौगोलिक अवस्थिति

काठमाडौं महानगरबाट ८ कि.मि. पूर्व र साँस्कृतिक नगर भक्तपुरबाट ४.० कि.मि. पश्चिममा ऐतिहासिक नगरी मध्यपुर थिमिको अवस्थिति रहेको छ। उत्तर-पश्चिम र दक्षिण-पूर्वतिर क्रमशः मनर्मति (मनहरा) खोला र हनुमति (हनुमन्ते) खोलाले सिमाना निर्धारण गरेको यस नगरको उत्तर-पूर्वतिर दुवाकोट गा.वि.स. रहेको छ। भक्तपुर, धुलिखेल, बनेपा, पनौती, जिरीजस्ता लोकप्रिय पर्यटकीय गन्तव्य स्थलहरूको स्वागतद्वारको रूपमा अवस्थित यो नगर उत्तर-पूर्व सिमाना फुकेर दक्षिण-पश्चिमतिर खुम्चिएको त्रिकोणात्मक आकारमा फैलिएको छ। विश्व मानचित्रमा २७°४०'७" देखि २७°४२'५" उत्तरी अक्षांश र ८५°२२'२०" देखि ८५°२४'२०" पूर्वी देशान्तरभित्र पर्ने यो नगर समुद्री सतहबाट लगभग १३२६ मिटरको उचाइमा रहेको छ। अग्लो, होचो भौगोलिक सतहले प्राकृतिक सुन्दरता प्रदान गर्ने यस नगरको पर्ने ऐतिहासिक बस्ती थिमि प्रवेश गर्न उकालो चढ्नु पर्ने विशेषता रहेको छ।

सम्पूर्ण नगरपालिका क्षेत्र कुल क्षेत्रफल ११.४७ वर्ग कि.मि.मा फ़ैलिएको छ भने नापी हुन बाँकी पुरानो आवास क्षेत्र बाहेक यसको क्षेत्रफल २०५०८-९-६-० रोपनी रहेको छ जसमध्ये कृषि योग्य भूमि १५४१७ रोपनी, आवास क्षेत्र १७१५ रोपनी र अन्य भूमि ३३७६-९-६-० रोपनी रहेको छ।[१]

## १.२ प्रशासनिक रेखाङ्कन

प्रशासनिक संरचना अनुरूप मध्यपुर थिमि नगरलाई १७ वडामा विभाजन गरिएको छ। भक्तपुर जिल्लाको २ वटा निर्वाचन क्षेत्र मध्ये मध्यपुर

थिमि नगरपालिकाको वडा नं. १ देखि ६ सम्म क्षेत्र नं. १ मा र वडा नं. ७ देखि १७ सम्म क्षेत्र नं. २ अन्तर्गत पर्दछ। २०५३ चैत्र १८ गते नगरपालिका घोषित यो नगर त्यस पूर्व बोदे, नगदेश, चपाचो, बालकुमारी र लोहँकिन्थलि गरी ५ वटा गा.वि.स.मा विभक्त थियो।

तत्कालीन नीलवाराही गा.बि.स.(बोदे) मा ९ वडा रहेको थियो भने हाल (नगरपालिका घोषणा पछि) यसलाई १,२ र ३ गरी जम्मा तीन वडामा सीमित गरेको छ। त्यस्तै गरी तत्कालीन नगदेशको ९ वटा वडा, चपाचो गा.वि.स को ९ वटा वडा, बालकुमारी गा.बि.स.को ९ वटा वडा र लोहकिन्थली गा.वि.स.को ९ वटा वडालाई क्रमश: जोडेर ४-६; ७-९ र १०-१४ तथा १५-१७ वडा बनाइएको छ। यसरी थिमिअन्तर्गत साविकको दुईटा गा.वि.स. अनुसार १८ वटा वडामा छरिएर रहेकोलाई हालको नगरपालिकाले ७-१४ सम्म ८ वडामा गाभेको छ।

## १.३ जातजाति र जनसङ्ख्या

नेवार जातिको वाहुल्यता रहेको यस नगरमा बाहुन, क्षेत्री, कामी, दमाइ लगायतका गैर नेवारहरूको पनि उपस्थिति रहेको छ। तर हाल आएर बढ्दो स्थानान्तरण र बसाइसराइको प्रभाव र यस क्षेत्रप्रतिको आकर्षणले राई, मगर, लिम्बू देखि हरेक जातजातिको बसोबास पनि देखिन थालेको छ। विशेषत: नगरको ऐतिहासिक घना बस्ती थिमि, नगदेश र बोदेमा बिशुद्ध नेवार समुदायको बसोबास अद्यावधि कायम रहेको पाइन्छ भने बाँकी क्षेत्रफलमा माथि उल्लिखित विभिन्न जातजातिहरूको समिश्रण पाइन्छ।

२०५८ को जनगणना अनुसार यस नगरको जनसङ्ख्या ४७ हजार ७५१ कायम भएको छ। जसमा पुरुष २४ हजार ७४७ (५१.८२%) र महिलाको सङ्ख्या २३ हजार ४ (४८.१७%) रहेको छ।[२]

oooooo

१. नगरपालिकाद्वारा प्रकाशित तथ्याङ्कको आधारमा।

२. विसं २०५८ को जनगणनाअनुसार।

अध्याय-दुई

# इतिहास

## २.१ ऐतिहासिक पृष्ठभूमि

इतिहास खोज्ने र खोतल्ने क्रममा वंशावली, शिलालेख, ताम्रपत्र, ताडपत्र, आदिलाई मूल स्रोतको रूपमा लिने गरिन्छ । यसबाहेक जनश्रुतिका कतिपय कुराहरूले पनि अध्ययनलाई आधार प्रदान गर्दछ । वंशावली र जनश्रुतिको सम्बन्धमा उल्लिखित विवरणलाई निर्विवाद सत्य मान्न सकिंदैन तर यिनीहरूबाट प्राप्त जानकारीलाई बिना आधार लत्याउनु पनि बुद्धिमानी ठहरिंदैन किनकि यस्ता सामग्रीहरूमा वर्णित कतिपय घटना विवरणले ऐतिहासिक तथ्यलाई सङ्केत गरेको हुन्छ । यस्तैगरी इतिहास अनुसन्धानको क्रममा जनस्तरमा स्थापित र प्रचलित संस्कृति, रीतिरिवाज, कलाकौशल, परम्परा आदिलाई पनि मूल आधारको रूपमा ग्रहण गर्नुपर्ने हुन्छ भने गुठी, खलक आदिजस्ता ऐतिहासिक र सामाजिक सङ्गठनलाई समेत प्रमुख स्रोत मान्न सकेमा अध्ययन अझ बढी गहकिलो हुनेछ । यिनै मान्यताको सेरोफेरोमा बसेर थिमि नगरको इतिहास खोतल्ने प्रयास गरिएको छ यस प्रस्तुतीमा ।

मध्यपुर थिमि नगरको इतिहास खोतल्ने क्रममा यहाँका तीनवटा सहरहरू नगदेश, बोदे र थिमिलाई विशेष रूपमा हेर्नुपर्ने हुन्छ । यी तीनवटै सहरहरूको ऐतिहासिकतामा मतैक्य भएतापनि यिनीहरूको स्थापना र विकासक्रमको सम्बन्धमा अनुसन्धान कर्ता र बुद्धिजीविहरूबीच मतभिन्नता अझैपनि कायम रहेको पाइन्छ । अर्कोतिर यी सहरहरू मध्ये कुन चाँहि सहर पहिले स्थापित भए वा कसरी स्थापित भए भन्ने कुरामा पनि आ-आफ्नै प्रकारका तर्कहरू अघि सार्ने गरिएको पाइन्छ । जसमध्ये केही तर्कहरू युक्ति

सङ्गत र तथ्यगत देखिन्छ भने केही तर्कहरू मनगढन्ते तर्क भन्दा माथि उठ्न सकेको पाईंदैन । यसकारण यी तीनवटै सहरहरूको ऐतिहासिकतालाई छुट्टाछुट्टै अंशमा तथ्य र सम्भाव्य तर्कको आधारमा सबिस्तार चर्चा गर्नु उत्तम हुने भएकोले यस प्रस्तुतीमा थिमिको ऐतिहासिक वस्तुस्थितिलाई प्रष्ट्याउने जमर्को गरिएको छ । थिमिसम्बन्धी इतिहास अध्ययनको क्रममा देखापरेका विविध जानकारीको आधारमा यो सहर लिच्छविकालमा नै पूर्ण रूपमा स्थापित भइसकेको देखिन्छ भने मध्यकालमा आएर यसले वृहत्तर आकार ग्रहण गरेको देखिन्छ ।

## २.२ लिच्छविकालीन थिमि

काठमाडौं उपत्यकाका पुराना ऐतिहासिक बस्तीहरू लिच्छविकाल पूर्व नै स्थापित भइसकेको कुरा बिभिन्न अनुसन्धान र अध्ययनबाट पुष्टी भइसकेको छ । अध्ययन कै क्रममा थिमिमा पनि दुईवटा लिच्छविकालीन शिलालेख फेला परेको छ । जसमध्ये हात्तिमहाँकालमा भेटिएको शिलालेखलाई हाल त्यहिंको ब्रह्मननि टोलमा रहेको इनारनिर पुनःस्थापित गरिएको छ[३] । बालकुमारी मन्दिरको पश्चिमतिरको धारानिर रहेको भनिएको[४] अर्को शिलालेख भने फेला पार्न सकिएको छैन । ब्रह्मननि टोलको इनारनिर पुनःस्थापित उक्त शिलालेखको अक्षर साह्रै खिइसकेको हुनाले यसमा उल्लिखित सम्पूर्ण विवरण किटान गर्न नसकिए पनि शिलालेखको १६ औं लाइनमा "......... *दुतकश्चात्र राजपुत्र जयदेव* ........." उल्लेख भएबाट सो शिलालेख राजा शिवदेव द्वितीयले राख्न लगाएको थाहा हुन्छ ।[५] राजाज्ञा जारी गरी राखिएको यस

३. धनवज्र वज्राचार्यको पुस्तकमा उल्लिखित उक्त शिलापत्र हात्तिमहाँकालमा रहेको भएतापनि केही वर्ष पहिले (करिब २०४० सालतिर) अज्ञानतावश ढल छोप्ने कार्यको लागि उक्तस्थानबाट ब्रह्मननि टोलमा ल्याएका थिए । पछि उक्त शिलालेखबारे जानकारी पाएपछि विसं २०५३ तिर पुनः टोलबासीहरू मिलेर त्यहिको इनारतिर ठड्याई सुरक्षित गर्ने कार्य भएको थियो ।

४. हरिराम जोशी - नेपालको प्राचीन अभिलेख । काठमाडौं : नेपाल राजकीय प्रतिष्ठान: विस २०३०, पृ. ३५४-३५५ ।

५. धनवज्र वज्राचार्य - लिच्छविकालका अभिलेख । कीर्तिपुर : नेपाल तथा एसियाली अनुसन्धान केन्द्र : विस २०३०, पृ ५२७-५२९ ।

शिलापत्रमा थिमि या यससम्बन्धी जानकारी दिने वाक्यांश वा स्थान उल्लेख भएनभएको प्रष्ट छैन तर यसमा "खातम्पल्ली" भन्ने स्थानको उल्लेख पाइन्छ। अमरकोष अनुसार पल्लि शब्दले घोष र आभीर (दूध, दही बेच्नेहरू) को थलोलाई बुझाउँछ।[६] तसर्थ उक्त "खातम्पल्ली" त्यस समय दूध, दही बेच्नेहरूको बस्तीको नाम रहेको देखिन्छ। यद्यपि यसले हालको कुन ठाउँलाई जनाउँदछ भन्न सकिएको छैन। तर केही वर्षअघिसम्म पनि बोदेमा पशुपालन एउटा प्रमुख पेशाको रूपमा रहेकोले उक्त स्थान बोदेकै आसपासको स्थान होकि अनुमानको विषय बन्छ।

यसरी नै अर्को एउटा लिच्छविकालीन शिलालेख (जिष्णुगुप्तको पालाको) बोदेको नीलबाराही स्थानमा फेला परेको छ। संवत् खिइसकेको उक्त शिलालेखमा श्री कलहाभिमानी राजा[७] की भाइ बुहारीले आफ्नो पतिको भलो होस् भनेर धारा बनाउन दिई यसको संरक्षणको निम्ति जग्गा प्रदान गरेको कुरा उल्लेख छ। यसमा पनि थिमि र बोदेसम्बन्धी कुनै प्रकारको सङ्केत भेटिएको छैन तर वैद्यमद्गुदि, याप्रिङग्राम, लुन्श्री प्रदेश र दुप्रङग्रामजस्ता स्थानहरूको उल्लेख रहेको छ।[८] यद्यपि यी स्थानहरूले हालको कुन स्थानलाई इंगित गर्दछ भन्न कठिन छ। तर उल्लिखित याप्रिङ ग्राम सम्बन्धमा केही अनुमान गर्न सक्ने देखिन्छ। नेपालभाषामा ये, या, यो सजिलैसित इ मा परिवर्तन भएको उदाहरणहरू भेटिन्छ। जस्तै येतखा = इखा (पुखू), योचंगु = इचंगु , म्ह्याच = मिच[९] आदि शब्दहरूमा क्रमशः ये, यो, या अक्षर इ मा

६. धनवज्र वज्राचार्य - लिच्छविकालका अभिलेख। कीर्तिपुर : नेपाल तथा एसियाली अनुसन्धान केन्द्र : विसं २०३०, पृ. ५२८-५२९।

७. "श्री कलहाभिमानी राजा" भन्ने उपनाम शासक अंशुवर्माले लिएका थिए। पछि यो उपनाम यति प्रसिद्ध भयोकी श्री कलाहाभीमानी राजा भन्ने वित्तिकै स्वयं अंशुवर्मालाई नै बुझाउन थालेको देखिन्छ। हेर्नुस् धनवज्र वज्राचार्य- "श्री कलहाभिमानी राजा"। पूर्णिमा -अङ्क १ विसं २०२१ पृ. ३-७।

८. देवपातन पाताटोलस्थित शसं ३९९ को एउटा शिलालेखया मानदेवका भक्त रत्नसङ्घले भगवान् रत्नेश्वरको लागि विभिन्न ग्रामको भूमि प्रदान गरेको वर्णन पाइन्छ। त्यसरी भूमि प्रदान गर्ने क्रममा "दुप्रङग्राम" (जुन स्थान नीलबाराहीमा पाइएको शिलालेखमा उल्लेख छ) को पनि १०० भूमि प्रदान गरेको छ। हेर्नुस् : हरिराम जोशी- पूर्ववत पृ ३७-३८।

९. नेपालभाषामा छोरीलाई म्ह्याच (म्ह्याय्) भन्ने गरिन्छ तर यही शब्दलाई दोलखा भाषामा मिच भन्ने गरिन्छ।

परिणत भएको छ । यसै आधारमा याप्रिङ शब्दलाई विश्लेषण गर्दा इप्रिङ हुनसक्ने देखिन्छ । अर्कोतर्फ म्हसप्रिङबाट म्हय्पि, खोपृङबाट खोप, नालङबाट नाला बनेर हालसम्म प्रचलनमा रहेको पाइन्छ । यसबाट इप्रिङ पनि इपि हुनसक्ने देखिन्छ । जसबाट पुनः खोपदे, नालादे भए झैं इपिदे = इ (पि) दे हुन थप सजिलो हुने देखिन्छ । तसर्थ यस विश्लेषणबाट याप्रिङग्राम भन्ने तात्कालीन स्थान अहिलेको ईदे हुन सक्ने देखिन्छ । बोदेसँगै रहेको यही ईदे (जुन ठाउँलाई हाल सरस्वती खेलको नामले चिनिन्छ)मा दशौं शताब्दीतिरको बसुन्धराको प्रस्तर मूर्ति रहेको छ[१०] भने ईदेको सिमाना मै राजा मानदेवको पालाको विश्वप्रसिद्ध चाँगुनारायणको भव्य मन्दिर समेत रहेको छ । यी सबै सामग्रीहरू क्रमबद्ध रूपमा यसरी फेला परेका छन् वा प्रतिस्थापन गरिएका छन् कि यसलाई सामान्य रूपमा संयोग मात्रै हो भनेर मान्न सकिंदैन । तसर्थ यथेष्ट सामग्रीको अभावमा लिच्छविकालीन थिमि बस्तीको विस्तृत संरचनाबारे थप पुष्टि गर्न नसकेतापनि यो नगर यस समयमा पूर्णतयाः स्थापित भइसकेको देखिन्छ ।

यसलाई पुष्टि गर्ने शिलालेख एउटा हालै फेला परेको छ । देवपातनस्थित रत्नेश्वर शिवलिङ्ग नजिकै घर निर्माणको क्रममा अर्को शिवलिङ्गसहित राजा मानदेवको पालाको सं ४०७ उल्लिखिते उक्त शिलालेखमा सार्थवाह (व्यापारीको नाइके) विमल सङ्घले आफू एवं राजाको पुण्य अभिवृद्धिको कामना गरी शिवलिङ्ग स्थापना गरेको उल्लेख पाइन्छ । शिवलिङ्गको लागि आयस्ताको भूमि प्रदान गर्ने क्रममा *"..........राज्ञः पाद प्रसादतः भक्त्या विमल संघेन सर्व्वलोक शिवःशिवः क्षेत्र यथा बोशिङग्राम दक्षिण प्रवेशे शतद्वयस्य भूमिः २०० भूय तत्रैव पञ्चाशता भूमिः ५० दयितापल्लि प्रदेशे अशीते भूमिः ८० थेम्मृङग्राम पूर्व प्रदेशे शतयस्य भूमिः २०० तगैव पञ्चाशता भूमि ५०"* भनेर लेखिएको छ ।[११] उक्त "थेम्मृङग्राम"ले हालको थिमि र

१०. धर्मसुन्दर वज्राचार्य - मध्यपुर थिमि नगर एक परिचय । थिमि : ल्यायम्ह पुच : विसं २०५५, पृ. २ ।

११. श्यामसुन्दर राजवंशी -"देवपाटनको विमल सङ्घको अभिलेख"। रोलम्बा मिलेनियम इस्यू (ईसं २०००), पृ. १८० ।

बोसिङग्रामले बोदेलाई जनाउँदछ र यसबाहेक दयितापल्लि भन्ने स्थानको उल्लेख पनि यसमा पाइन्छ । थिमिमा पाइएको लिच्छविकालीन शिलालेखमा पनि खातम्पल्लि भन्ने स्थानको उल्लेख हुनुले यी दुई स्थानहरू पल्लिअन्तर्गत कै छुट्टाछुट्टै गाउँ रहेको अनुमान लगाउन सकिन्छ । माथि पनि उल्लेख भईसकेको छ कि पल्लिले घोष र आभीरहरूको थलो भन्ने बुझिन्छ । "दयितापल्लि" र "खातम्पल्ली" जस्ता स्थानहरूको उल्लेखले तत्समय यो क्षेत्रमा घोष र आभीरहरूको प्राचुर्यता भएको थाहा हुन्छ ।

लिच्छविकालमा धेरै बस्तीलाई ग्राम भनिएको छ । तर तात्कालीन उक्त ग्रामले अहिलेको झैं सामान्य गाउँ भन्ने मात्रै बुझाउँदैन । बोदे नीलबाराही अभिलेखमा जिष्णुगुप्त बसी शासन गरेको बस्तीलाई समेत याप्रिङ ग्राम भनेको छ । तत्कालीन ग्रामअन्तर्गत पाञ्चाली (पञ्चायत)को व्यवस्था रहेको हुन्थ्यो र धेरै पाञ्चाली भएको बन्द व्यापारिक केन्द्रको रूपमा विकसित ग्रामलाई द्रङ्ग भनिन्थ्यो । तर यूपग्राम, दक्षिण कोलिग्रामजस्ता थुप्रै पाञ्चाली रहेको द्रङ्गलाई समेत ग्राम नै भनिएको छ । यसबाट तात्कालीन ग्रामले अहिलेको भन्दा पृथक परिभाषा बोकेको देखिन्छ । कौटिल्यको अर्थशास्त्रमा *"....... घटीमा एक सय घर भएको, बढीमा ५०० घर भएको, एक दुई कोशको इलाका भएको, परस्परमा रक्षाको प्रवन्ध भएको ग्राम बसाउनू ।"* भन्नेलाई आधारमा लिच्छविकालीन बस्तीमा ग्राम प्रयोग गरिएको देखिन्छ ।[१२] यस थिमि क्षेत्रलाई पनि थेम्मृङग्राम भनेर उत्कीर्ण भएबाट लिच्छविकालीन समयमा यो नगर एउटा व्यवस्थित बस्तीको रूपमा विकास भएको थाहा हुन्छ ।

थिमिको प्राचीनतालाई अझै खोतल्ने क्रममा यो बस्तीलाई किराँतकालीन बस्तीको रूपमा लिन सकिन्छ । लिच्छविकालको राष्ट्रभाषा संस्कृत भएकोले तात्कालीन स्थानका नामाङ्करण पनि संस्कृत शब्द गरेको हुनुपर्ने हो । तर लिच्छविकालका शिलालेखहरूबाट प्राप्त खोपृङ, म्हसप्रिङ, थेम्मृङ, बोसिङ, नालङ, तेङखु, थेञ्चो आदिलगायतका शब्दहरूमा झण्डै ८०

१२. धनवज्र वज्राचार्य - "लिच्छविकालीन बस्ती" । पूर्णिमा १८ (विसं २०२५), पृ ८७-१०१ ।

प्रतिशत शब्द असंस्कृत अथवा किराँत परिवारका भाषाको रहेको छ।[१३] अर्कोतर्फ लामो कालसम्म किराँतहरूको शासन चलेको भन्ने जनश्रुतिसमेत रहेबाट ती स्थानका नामहरू किराँतकालमै रहिसकेको देखिन्छ। यसै आधारमा थिमि पनि किराँतकालीन बस्ती हो भन्न सकिन्छ।

थिमि ब्रह्मननि टोलमा रहेको शिलालेखमा "द्विजातिभ्यो"[१४] शब्दको प्रयुक्त भएबाट तत्समय यहाँ जाति ब्यवस्थाको प्रचलन रहिसकेको सिद्ध हुन्छ भने बोदे नीलबाराही स्थानमा पाइएको शिलालेखमा प्रयुक्त "गौष्ठिकभ्यो" शब्दले गुठी स्थापनाको प्रचलन समेत रहेको बुझाउँछ। थिमिको सोही शिलालेखमा उल्लिखित "...........*विष्टि मनुष्य सम्बन्धेन प्रतिवर्ष यत्पुराणशत* .............."[१५] भन्ने वाक्यांशले त्यस समय यहाँ राजकीय दस्तुर लिने चलन रहेको प्रष्टिन्छ। यी तथ्यहरूले थिमिको तत्कालीन सामाजिक र प्रशासनिक व्यवस्थाबारे छर्लङ्ग पारेको छ। यसरी विभिन्न कालक्रममा स्थापित ती शिलालेखहरूले थिमि बस्ती लिच्छविकाल मै स्थापित भइसकेको मात्र नभई धेरै हदसम्म व्यवस्थित नगरको रूपमा विकसित भइसकेको सिद्ध हुन्छ। नेपालको प्राचीन शिलालेखमा उल्लेख गरिएको थिमि बालकुमारीको पश्चिमतिरको धारानिर रहेको भनिएको शिलालेखमा "गुरोर्वासुदेव" को उल्लेख रहेको छ[१६] जसले तत्समय थिमिमा पनि वासुदेव (विष्णु)को मन्दिर रहेको बुझिन्छ। उक्त शिलालेख रहेको भनिएको ठाउँमा यद्यावधि विष्णुवीरको मन्दिर समेत रहेबाट कतै उक्त मन्दिर र शिलालेखबीच कुनै सामञ्जस्यता त रहेको छैन भन्ने अनुमान लगाउन सकिने देखिन्छ। यद्यपि यसको पुष्टि गर्ने थप सामग्री र स्वयम् उक्त शिलालेख समेत फेला पार्न सकिएको छैन।

---

१३. धनवज्र वज्राचार्य - "लिच्छविकालीन इतिहासमा किराँतकालको प्रभाव"। धनवज्र वज्राचार्यका ऐतिहासिक लेख सङ्ग्रह भाग १ (विसं २०५६), पृ. १-७।

१४. हरिराम जोशी - नेपालको प्राचीन अभिलेख। काठमाडौं : नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान : विसं २०३०, पृ २४२-४४३।

१५. धनवज्र वज्राचार्य - लिच्छविकालका अभिलेख। कीर्तिपुर : नेपाल तथा एसियाली अनुसन्धान केन्द्र : विसं २०३०, पृष्ठ ५२९।

१६. हरिराम जोशी - नेपालको प्राचीन अभिलेख। काठमाडौं : ने. रा. प्र. प्र. : विसं २०३०, पृ. ३५४-३५५।

लिच्छविकालमा प्रचलित धर्म मध्ये बैष्णव धर्म पनि रहेको र उक्त शिलालेखमा "गुरोर्वासुदेब" उत्कीर्ण भएबाट तात्कालीन समयमा यहाँ वैष्णव सम्प्रदायको बलियो उपस्थित रहेको अनुमान गर्न सकिन्छ ।

## २.३ मध्यकालीन थिमि

थिमि इतिहास उत्खननको क्रममा एउटा अचम्मको तिक्तता के भेटिन्छ भने लिच्छविकाल मै स्थापित भई प्रशानिक कार्य समेत सञ्चालन भइसकेको देखिने यस नगरसम्बन्धी करिब ७०० वर्षको इतिहास जानकारी विहीन रहेको छ । लिच्छविकालीन समयको पछिल्लो जानकारी पश्चात् मल्लकालसम्बन्धी जानकारी प्राप्त हुन थालेसम्मको अन्तरालमा कुनै किसिमको ऐतिहासिक सामग्री फेला पार्न सकेको छैन । लिच्छविकालीन शिलालेखको प्राप्तीपछि एकैपटक नेसं ४७० को सामग्री भेटिएको छ । यसबीचको करिब ७०० वर्षमा घटेका घटनाक्रमबारे जानकारी दिने ऐतिहासिक सामग्री प्राप्त हुन नसकी उक्त समयावधि थिमिको इतिहास अनुसन्धानको क्रममा शून्य समय भएर रहेको छ ।

यसपछिबाट भने प्रशस्त सङ्ख्यामा ऐतिहासिक सामग्रीहरू फेला पर्दछ जसले थिमिको मल्लकालीन समयलाई धेरै हदसम्म स्पष्ट पार्दछ । त्यसमध्ये गोपालराज वंशावलीमा उल्लिखित नेसं ४७० को घटना नै हालसम्मको पहिलो मल्लकालीन सामग्री भएको छ । यसको ५२(ख) औं पत्रमा *"............न्त मनिगल जुस्यम् थ्यमिस जास्य लुह्निं याङा क्वाठ डंङा ॥ ॥ सं ४७० माघ सुदि ॥........"* अर्थात् *"............(भ्व)न्त मनिगल मिलेर थिमिमा पुगी लुह्निं (?) गरियो किल्ला गाडियो । । सं ४७० माघ सुदि ।..........."* भन्ने घटना विवरण पाइन्छ ।[१७] त्यस्तैगरी सोही वंशावलीको ५५(क) औं पत्रमा *"..........थ्व सम्बच्छलसबु दीतला थोव नवमी कोन्हु यह्नं प्रजा आदिन, हाथार थ्यमीस जारवा, थे श्रीश्री जयस्थिति राजमलदेवसन थमु अगुमान याङ; ......."* अर्थात् *"........यस साल (नेसं ४९२) आषाढ शुक्ल नवमीको*

१७. धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल - द गोपालराज वंशावली । काठमाडौं : नेपाल रिसर्च सेन्टर, ईस. १९८५, पृ ६६०, १०८ ।

*दिन पाटनका प्रजा आदि थिमिमा लड्न आए यस बेला जयस्थिति मल्ल स्वयम् अघि सरी लड्न गए.........* "[१८] भनेर उल्लेख गरिएको पाइन्छ। फेरि अर्को एउटा घटनामा *"........सं ४९६ श्रावण बद्धि ९ श्री राजकुलन ग्वाठ नेम भ्वाङ मेस स्मस्त लिस्यं हया उदेशना थ्यमीं डोयया ह्नोयका, ओबु डाया डङ याङा दाम प्ल १०.........*" अर्थात् *"..... नेसं ४९६ श्रावण कृष्ण नवमीको दिन श्री राजकुलद्वारा दुईजना गोठालाले राँगा जम्मै फिर्ता ल्याएको हुनाले थिमिका डोयका बाबुलाई तिराई ओबु पिटी दाम प्ल १० दण्ड गरियो........*" भनेर लेखिएको छ।[१९] यी घटना विवरणहरूले थिमिको बस्ती विकास तात्कालीन् समयमा भइसकेको र यहाँ डोय जाति (थर) को बसोबास रहेको बुझिन्छ। उक्त डोय जाति हाल कुन समुदायले चिनिन्छ सोको स्पष्ट जानकारी दिने थप सामग्री प्राप्त भइनसकेतापनि अध्ययनले डोयहरू सिम्रौनगढबाट आएका हुन् र हालका कस (कायष्ठ) हरू पनि तिनै डोय जाति मध्येकै एक थर भएको देखिन्छ।[२०] त्यस्तै नेसं ५०० मा कुलो बनाएको उल्लेख गर्दै सो अवसरमा भोज खुवाउन थिमिसम्मका मानिसहरूबाट चामल, दाल, भटमास आदि चन्दा उठाएका विवरण गोपालराज वंशावलीको पत्र ५८(ख) मा पाइन्छ जसले तत्समयको थिमि बस्ती संरचनाबारे थप स्पष्ट चित्रण गर्दछ।

थिमिको इतिहास अनुसन्धानको क्रममा थ्याम दिगुद्यः, बालकुमारी मन्दिर, सिभा महादेव आदिको महत्वपूर्ण भूमिका रहन्छ। गुठी संस्थानमा रहेको एउटा ताडपत्र अनुसार नेसं ४७८ मा बालकुमारी मन्दिर ठूलो बनाएको[२१] भन्ने लेखिएबाट बालकुमारी मन्दिरको स्थापना नेसं ४७८ भन्दा धेरै अगाडी भएको पुष्टि हुन्छ। मन्दिर भित्र अझै पनि देख्न सकिने चारकुनामा ठड्याइएको काठेखम्बाको आधारमा शुरुको मन्दिर एकतले र सानो रहेको अनुमान लगाउन सकिन्छ।

---

१८. धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल - द गोपालराज वंशावली। काठमाडौं : नेपाल रिसर्च सेन्टर, ईस. १९८५, पृ. ६६३, १११।

१९. धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल - द गोपालराज वंशावली। काठमाडौं : नेपाल रिसर्च सेन्टर, ईस. १९८५, पृ. ६६५, ११३।

२०. मोहन पन्त - "ठिमी सहर बस्तीको विकासक्रम र कालखण्डको त्रिभाजन"। नेस्टार पृष्ठ २ (विसं २०५२ असोज), पृ. ४७।

त्यस्तै नेसं ६४१ को एउटा ताडपत्रमा थामाथलिको जग्गा बिक्री गर्दा जग्गाको चारकिल्ला खुलाउने क्रममा बिस्का जात्राको गुठी जग्गादेखि दक्षिणको जग्गा उल्लेख रहेको छ ।[२२] बालकुमारीको नेतृत्वमा सम्पन्न हुने बिस्का जात्रा उल्लेख रहेको उक्त ताडपत्रले बालकुमारीको प्राचीनतालाई बल प्रदान गर्दछ र नेसं ७१० मा सत्य कस र नित्य कसले चढाएको छत्रले यसको प्राचीनतालाई थप अगाडि धकेल्छ । यद्यपि विभिन्न चाडपर्वहरूमा गरिने बालकुमारी मन्दिरको पूजादिले थिमिको इतिहासमा महत्वपूर्ण सम्बन्ध राख्ने भएतापनि बालकुमारी मन्दिर र यसको द्यःछें (देवता बासस्थान) को रूपमा प्रयोग गर्दै आइरहेको र थिमिको तलेजु पूजासमेत गरिने थिमि लायकू (हाल आदर्श मा.वि. रहेको) को सम्बन्धमा थप प्रकाश पार्ने कुनै प्रकारको सामग्री प्राप्त हुन नसक्नु आश्चर्यको विषय भएको छ ।

थिमि स्वंगाःपुखूको थ्याम दिगु द्यः नेसं ७५८ मा जीर्णोद्धार गरिएको[२३] भन्ने सोही मन्दिरको शिलालेखमा उल्लेख भएबाट उक्त मन्दिर धेरै समय अगाडि नै निर्माण भएको प्रष्ट हुन्छ । यक्ष मल्लसँगै जीव मल्लको नाम पनि उत्कर्ण रहेको सो शिलालेखमा उल्लेख भएको "..... *श्रीयक्षमल्लानुजः शास्त्रवेदीः श्रीजीवमल्लो नृपरत्नमूर्तिः ॥ तयोर्द्वयोर्विजयराज्ये ॥ ..... देवल प्रतिष्ठा दिन.........*"[२४] भन्ने वाक्यांशले उक्त मन्दिर यक्ष मल्ल र जीव मल्लको संयुक्त शासनकालमा बनेको थाहा हुन्छ । नेसं ५६४ बाट यक्ष मल्लको एकलौटी शासन देखिएबाट[२५] उक्त मन्दिर नेसं ५६४ भन्दाअघि निर्माण भएको प्रष्ट हुन्छ । अर्कोतर्फ उक्त मन्दिरको निदालमा नेसं ७५७ भनेर कुँदिएबाट थ्याम दिगुद्यः र सिभा महादेवको जीर्णोद्धार एकै समयमा गरिएको देखिन्छ । सिभाटोलको उक्त बाखाछेँ महादेव मन्दिर यक्ष मल्लको पालामा बनेको कुरा सोही मन्दिरको शिलालेख लेखिएको छ । त्यस्तै नेसं ६८५ को

२१. त्रैकुण्ठहरी श्रेष्ठ - "थिमि बालकुमारी" । नेस्टार पृष्ठ १ (विसं २०५१), पृ. ६२ ।

२२. शङ्करमान राजवंशी - भूमिसम्बन्धी तमसुक-ताडपत्र-४ । काठमाडौं : पुरातत्व विभाग : (विसं २०४४), पृ २ ।

२३. A report on the survey and study of Newari script . Kathmandu : Department of Archeology, National Archies : 1995 AD, pp 57.

२४. शङ्करमान राजवंशी - भक्तपुर शिलालेख सूची । काठमाडौं : वीर पुस्तकालय : विसं २०२०, पृ ७ ।

ताडपत्रमा गंगा महारानी, त्रैलोक्य मल्ल र त्रिभुवनले मरुटोलस्थित करुणामयको नाममा जग्गासहित गुठी राखिदिएको विवरण पाइन्छ । जसले करुणामयको स्थापनालाई अझै अगाडि धकेल्छ ।[२६] तर नेसं ७०७ को ताडपत्रमा लोकेश्वरको मन्दिर बनाई पुनः जग्गासहित गुठी राखेको ताडपत्र[२७] फेला परेबाट लोकेश्वरको हालको मन्दिर पछि मात्रै निर्माण भएको प्रष्ट छ र त्यहाँस्थित दीपंकर प्रतिमाको दाहिने हातमा अंकित नेसं ७३९ ले कालक्रमसँगै यसको मर्मतसम्भार हुँदै आएको देखाउँछ । संवत् उल्लेख नरहेको इनायलाछिको गरुढ नारायणको शिलालेखमा उक्त मन्दिर गङ्गा महारानी, त्रैलोक्य मल्ल, त्रिभुवनको संयुक्त शासनकालमा स्थापना गरेको उल्लेख छ । यिनीहरूको संयुक्त शासनकाल नेसं ६७० देखि ७३० सम्म चलेको देखिन्छ । यसबाट उक्त मन्दिरको निर्माण पनि नेसं ७०० को हाराहारीमा गरिएको देखिन्छ । यिनै सयुक्त शासकहरूद्वारा नेसं ७०६ मा थिमि दिगुटोलको डबली निर्माण गरेको कुरा त्यहाँ स्थापित शिलालेखमा उल्लेख छ । दिगुटोलमा अवस्थित ठूलो दीपंकरको हातमा लेखिएको नेसं ६४८ ले यसको प्रतिस्थापन र दिगुवाहाल (गुणकिर्ति महाविहार) को निर्माण अझै अगाडि भएको देखाउँछ । यसै विहारमा रहेको नेसं ६९६ को एउटा ताम्रपत्रमा काठमाडौं असनको कोलंपु ल्हुलछेँ निवासी जिताज तुलाधर नामको दानपति व्यक्तिले यसै विहार (गुणकीर्ति महाविहार)मा कान्तिपुरे राजा सदाशिव मल्लको उपस्थितिमा सम्यक भोजको आयोजना सम्पन्न गरेको उल्लेख छ ।[२८] यसले दिगुवाहाललाई अझ महत्वपूर्ण र ऐतिहासिक बनाएको छ र चपाचोको कुतिंचिवाःस्थित चैत्यको निर्माण नेसं ७०३ मा गराएको कुरा शिलालेखमा पाइन्छ । यसप्रकार नेसं ७०० सम्मको अवधिमा थिमिको प्रमुख मन्दिर, चैत्य, विहार निर्माण भइसकेको प्रष्ट हुन्छ । अध्ययनकै

---

२५. धनवज्र वज्राचार्य (सं) - इतिहास शंसोधनको प्रमाण-प्रमेय पहिलो भाग । ललितपुर : जगदम्बा प्रकाशन : विसं २०१९, पृ. ११३ ।

२६. धर्मसुन्दर वज्राचार्य- थिमि देयुया बहाः व वज्राचार्य संघ । थिमि : मध्यपुर थिमि वज्राचार्य सङ्घ : विसं २०६०, पृ. ९, ७३ ।

२७. शङ्करमान राजवंशी - भूमिसम्बन्धी तमसुक ताडपत्र ४ । काठमाडौं : पुरातत्व विभाग : विसं. २०४४, पृ. ७ ।

२८. छत्रबहादुर कायष्ठ - "थिमि दिगु बहालय् च्वंगु नेसं ६९६ या ताम्रपत्र : छगू अध्ययन" । नेपाल संस्कृति अङ्क १३७ (नेसं ११२२), पृ. ३९-४२ ।

क्रममा सिभाटोलको डबली पनि नेसं ७८६ मा निर्माण गराएको पाइन्छ। थिमिको प्रमुख पर्व बिस्का जात्रामा विशेष भूमिका राख्ने[२९] चपाचो गणेश र पतसिक्व गणेश मन्दिर पनि यही समयमा निर्माण भएको विवरण त्यहि मन्दिरको शिलालेखमा पाइन्छ। चपाचो गणेश मन्दिरको शिलालेखमा *"श्रीश्रीश्रीथानगणेसके चपालचो टोलया ..........नायकन देवल दाडा .........सम्वत ७७४......"* उत्कीर्ण रहेको छ। जितामित्र मल्लका मन्त्रीहरू भागीराम, भयरामलगायत दुर्ज, सतेराम, कविराम, जयहरिको समूहले पतसिक्व मन्दिर नेसं ७९४ मा निर्माण गराएको कुरा सोही मन्दिरमा राखिएको शिलालेखमा उल्लेख छ। सिद्धिकाली मन्दिर अगाडिको मण्डप पनि नेसं ७९६ मा निर्माण गरेको थाहा हुन्छ। त्यस्तै प्रकारले नेसं ७५७ र ७५८ मा बाखाछें महादेव र थ्याम दिगुद्यःको जीर्णोद्धार तथा नेसं ७७९ मा दिगु भैरवलाई स्वर्णतोरण चढाएको कुरा शिलालेख अध्ययनबाट देखिन्छ। शिलालेख अध्ययन कै क्रममा नेसं ७७६ मा स्थानीय जीस्वां विहार बनाई गुठी समेतको व्यवस्था गरिदिएको उल्लेख पाइन्छ। थिमिको एकमात्र शिखरशैलीको मन्दिर ताहादेगः नेसं ७६९ मा इन्द्रसिंह दुवालद्वारा निर्माण गर्न लगाएको तथ्य त्यहाँ उत्कीर्ण शिलालेखमा अङ्कित छ। थिमि बाहाखाबजारमा अवस्थित पद्मपाणी लोकेश्वरको स्थापना रूपसिंहद्वारा नेसं ७७२ मा र जीस्वां विहारको बाहिरको पाटी रूपदेव वज्राचार्यले नेसं ७२० मा निर्माण गराएको थियो। यसरी नेसं ८०० सम्मको अवधिमा यहाँका प्रमुख चैत्यहरूका साथै थुप्रै सतल, मन्दिर आदिको निर्माण भएको पाइन्छ।

नेसं ८०० सम्मको समयमा यहाँका प्रमुख स्थान र टोलहरूको नाम पनि विभिन्न सामग्रीहरूमा प्रशस्त मात्रामा देखिन थालेको पाइन्छ।

२९ थिमि बिस्का जात्राको दोस्रो दिन अर्थात् वैशाख १ गतेको बायुलिसिया जात्रा सिद्धिकाली र विष्णुवीरको नेतृत्वमा आ-आफ्नो परम्परागत क्षेत्राधिकार भित्र परिक्रमा गरी सम्पन्न गरिन्छ। विष्णुवीरको जात्रामा पतसिक्व गणेशलाई जात्रामा सहभागी गराउन तीन पल्टसम्म बाजागाजासहित आमन्त्रण गर्न जानु पर्दछ। त्यस्तै सिद्धिकालीको जात्रामा सहभागी हुने क्रममा चपाचो गणेश इनायक्व क्षेत्रमा रहेको सिद्धिकाली ध्वाका बाहिर जान नहुने प्रचलन रहेको छ।

३० शङ्करमान राजवंशी - भक्तपुर शिलालेख सूची। काठमाडौं : वीर पुस्तकालय : विस २०२०, पृ १३८।

नेसं ७०० सम्मको ताडपत्रमा बखाछें, पसलछें, क्वतखाछें, दथ्वटोल, क्वचचटोल, क्वथ्वतोल, दुंथुंगाम, थंथ्वटोल, हितिफुसी टोल, बाहारखा क्षेत्र, देगुरिगोष्ठि क्षेत्र, क्वरंखु जस्ता स्थानहरूको नाम उल्लेख रहेको पाइन्छ। यस अवधिमा क्वथुटोल, क्वतखाच्छे टोलको उल्लेख बढी मात्रामा भेटिन्छ। त्यस्तै नेसं. ७०० देखि ८०० सम्मका तमसुकहरूमा क्वथुटोल, क्वलखुटोल, दथ्वटोल, हितिफुसीटोल, क्वतखाच्छे टोलको निरन्तरतासँगै दहबु क्षेत्र, मादुटोल, भेरुच्छे मंरा, पबु, चपालचो, खपोबु, इनायलाछि टोल, क्वथक्व टोल जस्ता थप स्थानको उल्लेख भेटिन्छ। यस अवधिमा क्वथटोल, दथ्वटोल, मादुटोल, हितिफुसीटोल, क्वतखाच्छे ननि आदि स्थानको नामहरूको उल्लेख बढी पाइन्छ। यी मध्ये केही स्थानहरू अझै सोही नामले चिनिन्छ। यद्यपि धेरै नामहरूले हालको कुन क्षेत्रलाई इंगित गर्दछ भन्न कठिन छ। यसरी हालसम्म प्रचलित नामहरूमा बाहाखा, दथुटोल, इनायलाछि, चपाचो, मरुटोल आदि रहेका छन् भने हितिफुसि टोल, थंटोल, थथ्वटोल, क्वथटोल, येतछें, क्वतखाच्छे, नटोलजस्ता थुप्रै नामहरू हाल प्रचलनमा छैन। यसपछि नेसं ८०० पछाडिका शिलापत्र र ताडपत्रहरूमा नटोल, लादोल, बोहारी क्षेत्र, कुरंषराछे, क्वराखुटोल, मामचाननि, छाकतोल, थराचुटोल आदि थप नामहरू भेटिन्छ भने हितिफुसि टोल, क्वरंखु टोल, नटोल, मरुटोलको वाहुल्यता अझै देखिन्छ। यसप्रकार कालान्तरसगै विभिन्न सामग्रीहरूमा देखिएका उल्लेख रहेका थिमिका विभिन्न स्थानहरूको नामावलीलाई सुचिकृत गरेर प्रस्तुत गरिएको छ। (हे.परिशिष्ट क)

ऐतिहासिक सामग्रीहरूको अध्ययनबाट नेसं ८०० देखि थिमिको इतिहासले कोल्टो फेरेको देखिन्छ। मन्दिर, विहार, चैत्य जस्ता प्रमुख निर्माण र पुनःनिर्माणसँग सम्बन्धित यसअघिका कार्यहरू नेसं ८०० देखि पाटी, सत्तल, धारा, इनार, डबली आदिमा आकर्षित हुन पुगेको देखिन्छ र साथै ती निर्माणहरूको व्यापकता चोक गल्ली भन्दा बस्ती बाहिर एवं वरपरका स-साना बस्तीहरूसम्म फैलिएको पाइन्छ।

सिनामंगल गणेश मन्दिरमा रहेको पाटी र मन्दिर क्रमशः नेसं ७९० र नेसं ९३० मा निर्माण गराएको कुरा त्यहिंको शिलालेखमा उल्लेख छ। चोरपुरको पाटीमा रहेको शिलालेख अनुसार नेसं ९००मा निर्मित उक्त पाटी

र सँगैको मूर्तिको स्थापना र चोरपुरबाट गाम्चा जाने बाटोमा रहेको पाटीको निर्माण थिमि इनायलाछिका मानन्धर जयसिंद्वारा गराएको उल्लेख छ। त्यस्तैगरी सम्वत् नखुलेको बोदे तिगनि नीलबाराही मन्दिरको उत्तर-पश्चिममा रहेको पाटीको शिलालेखमा उक्त पाटी थिमिका कृष्ण नारां भारो शिवलक्ष्मी, थकुंलक्ष्मी मिलेर बनाएको विवरण पाइन्छ। यी सम्पूर्ण सामग्रीहरूले यस समयको विकासको विकेन्द्रीकरणलाई प्रष्ट्याउँछ। चोरपुर र नीलबाराही आदि ठाउँमा पाइएका शिलालेखहरूमा "*......मध्यपुरीस्थाने बालकोमारीदेवी सन्निधाने......*"[३०] भन्ने वाक्यांशले व्यापकतालाई जोड दिन्छ। इदे (हालको सरस्वती खेल) को सरस्वती मन्दिरमा रहेको शिलालेखमा उक्त सरस्वती मन्दिर थिमि चपाचो बस्ने कल्याण थापा भारोका स-परिवार मिलेर क्रमशः नेसं ८५३ र नेसं ८७३ मा निर्माण गरेको उल्लेख छ।[३१] त्यस्तैगरी गुंडु, तर्खालको पाटीमा रहेको नेसं ९९८ को शिलालेखमा "*......नेपालदेशे ठिमि नाम ग्रामे स्थित......*" वाक्यांश पाइएको छ।[३२] यसले थिमिको तात्कालीन प्रभावको व्यापकतालाई थप फराकिलो बनाएको छ। यसरी नेसं ८०० पछिको निर्माण कार्य चोरपुर, सिनामंगल, सिरुतार, बालकोट, गुंडु, सरस्वतीखेल आदि स्थानसम्म फैलिएको पाइन्छ।

सङ्ख्यात्मक आधारमा विश्लेषण गर्दा धारा, पाटी, सत्तल, मन्दिर आदिजस्ता सार्वजनिक महत्वका अधिकांश निर्माणहरू यसै अवधिमा आएर निर्माण भएको देखिन्छ। थिमि क्षेत्रको १४२ वटा पाटीहरू मध्ये ५७ वटा मात्र शिलालेख रहेको छ। यी पाटीहरू मध्ये कुनै भत्किसकेका छन् भने कुनै अतिक्रमित अवस्थामा रहेका छन्। शिलालेख भएको पाटीहरू मध्ये पनि २१ वटामा कुनै हराइसकेको, कुनैमा संवत् नभएको आदि समस्याहरू रहेका छन्। बाँकी ३६ वटामा नेसं ७००–८०० का ५ वटा, नेसं ८००–९०० का १४ वटा र १७ वटा नेसं ९०० पछिका रहेका छन्। यसबाहेक विभिन्न

---

३१. छत्र बहादुर कायष्ठ - थिमि देयुया पुलांगु स्ये। मध्यपुर : मध्यपुर क्षेत्र विकास मञ्च : विसं २०५५, पृ ६८।

३२. शङ्करमान राजवंशी - भक्तपुर शिलालेख सूची। काठमाडौं : वीर पुस्तकालय : विसं २०२०, पृ १२७।

मन्दिर, चैत्य, डबलीमा प्रतिस्थापित करिब ३५ वटा[३३] जति शिलालेखमध्ये नेसं ७०० भन्दा अधिको एउटा रहेको छ भने नेसं ७००-८०० को १३ वटा, नेसं ८००-९०० को १४ वटा र नेसं ९०० पछिको जम्मा दुईवटा रहेको छ। यसप्रकार नेसं ७००-८०० को अवधिमा प्राप्त १३ वटा शिलापत्रमा ८ वटाले मन्दिर र चैत्य निर्माण एवं जीर्णोद्धारलाई इंगित गर्दछ भने नेसं ८००-९०० को १४ वटा शिलालेख मध्ये ६ वटाले मन्दिर निर्माण र जीर्णोद्धारलाई देखाउँछ। विभिन्न मन्दिर र पाटीहरूमा पाइएको शिलालेखहरूको यस तथ्याङ्कले नेसं ७००-८०० को अवधिमा स-साना मन्दिर, चैत्य आदिको निर्माण र जीर्णोद्धार बढी भएको पाइन्छ भने नेसं ८०० पछिको समयमा चैत्य, मन्दिर आदिको निर्माण एवं जीर्णोद्धारले निरन्तरता पाउनुका साथै नेसं ८०० अगाडि फाटफुट मात्रै देखिएको पाटी निर्माणले व्यापकता पाएको देखिन्छ।

समग्रमा नेसं १००० सम्मको शिलालेखको तथ्याङ्कलाई केलाउँदा झन्डै १०० को सङ्ख्यामा रहेको यहाँको शिलालेखहरू मध्ये ५५ वटा नेसं ८००-९०० अर्थात् १०० वर्षको समयावधिभित्र राखिएको रहेका छन् भने यसभन्दा अधिको (नेसं ५६०-८००) २४० वर्षमा राखिएको शिलालेखको सङ्ख्या २४ वटा मात्र छन्। त्यस्तै बाँकी ३१ वटा जति नेसं ९०० पछिको १०० वर्षमा राखिएको देखिन्छ।

विभिन्न समयमा निर्माण भएका यी पाटीहरूमा प्रत्येक बेलुकी विभिन्न देवीदेवताको आराधना स्वरूप कुनै निश्चित खलक गुठीले नित्य गर्दै आएको पाइन्छ। ती भजनगीतहरूको अध्ययनमा सम्पूर्ण भजनगीतको रचना नेसं ८०० पछि मात्रै गरिएको भेटिन्छ।[३४] अर्कोतर्फ नेसं ८०० बाट पाटी निर्माणले व्यापकता पाएको तथ्याङ्कले देखाउँछ। यसको आधारमा विश्लेषण गर्दा पाटीको निर्माणसँगै भजन खलकको स्थापना एवं व्यवस्थापन भएको र यसको निम्ति आवश्यक पर्ने गीतहरू पनि तत्पश्चात् सिर्जना गर्न थालिएको देखिन्छ। फलतः यस अवधिमा थुप्रै भजनगीतहरूको रचना भएको भेटिन्छ। यसरी भजनगीत रचनाको व्यापकता सँगसँगै यहाँ थुप्रै साहित्यिक सर्जकहरूको

---

३३. यी तथ्याङ्कहरू नेसं १००० सम्मको मात्र हो।

३४. छत्रबहादुर कायष्ठ- थिमि देयया पुलांगु म्ये। मध्यपुर: मध्यपुर क्षेत्र विकास मन्च,विसं २०५५।

जन्म भएको पाइन्छ । सर्वसाधारणदेखि राजपरिवार सदस्यहरूले सिर्जना गरेका गीत एवं भजनगीतको समेत प्राप्तीले उक्त समयको साहित्यिक उर्वरतालाई चिनाउँदछ । प्राप्त भजनगीतहरूमा देखिएका थुप्रै साहित्यिक सर्जकहरूमा गोकुलनाथ, दुर्गानन्द, काशीनाथ आदि रहेका छन् । त्यस्तै महिला सर्जकहरूमा दिवालक्ष्मीका साथै विष्णुमति, रानी बृद्धिलक्ष्मीकोसमेत उपस्थितिले तात्कालीन समयको साहित्यिक विकास उच्चतम् रहेको देखिन्छ ।[३५] यसै समयमा यहाँ नेपालभाषालगायत मैथिली र बङ्गाली भाषाका नाटकहरूकोसमेत मञ्चन भएको तथ्य फेला परेका नाटकहरूबाट प्रष्टिन्छ ।

यसरी अध्ययन र विश्लेषण गर्ने क्रममा नेसं ७००-८०० को समय पूनर्जागरणको रूपमा विकास भएको पाइन्छ भने नेसं ८००-९०० को समयमा पुरानो साँस्कृतिक, सामाजिक विकास निर्माणको निरन्तरतासँगै थप विकासको व्यापकता समेत प्रष्टिन्छ । तसर्थ नेसं ८००-९०० को अवधिलाई थिमिको स्वर्ण युगको रूपमा लिन सकिन्छ ।

नेसं ९०० देखि भने पाटी, धारा, इनारजस्ता सम्पदा निर्माण कार्यमा मनग्गे शिथिलता आएको देखिन्छ यद्यपि यस समयमा भएका थोरै नै भए पनि पाटी, गुठी आदि निर्माण र व्यवस्थापनसम्बन्धी जानकारी दिने शिलालेख र ताडपत्रहरूले अघिल्ला समयको विकास निर्माणको निरन्तरता पाएको प्रमाणित गर्दछ । नेसं ९४९ को सिद्धिकाली मन्दिरको शिलालेखमा उल्लिखित बालकुमारी निवासी गोपालराम भारोले सिद्धिकालीमा "बुसाधलं" गर्ने गुठी राखेको भन्ने विविरण नेसं ९५४ मा निर्मित दिगु गणेशनिरको पाटीको शिलालेख, दिगुटोलको गोरखनाथ मन्दिर पूर्वको पाटीमा रहेको नेसं १००० को शिलालेख, दथुटोलको मूलबाटोमा अवस्थित पाटीमा रहेको नेसं ९४२ को शिलालेख, कयकुतां बाहिरको पाटीमा रहेको नेसं १०२४ को शिलालेखलगायत झण्डै ४० को सङ्ख्यामा भेटिने शिलालेखहरूले यस [illegible] विकासलाई

३५. थिमिका विभिन्न भजन खलकहरूले गाउँदै आएका भजनगी[illegible] गा
मल्लको पालामा रचित एउटा गीतसमेत फेला परेको छ ।
गीतहरूमा यो सबभन्दा पुरानो हो । त्यस्तै बडामहाराजा[illegible]
रचित दुईवटा भजनगीत पनि फेला परेको छ- हेर्नुस् [illegible]
म्ये । मध्यपुर : मध्यपुर क्षेत्र विकास मञ्च : विसं २[illegible]

चिनाउँछ र तुलनात्मक रूपमा थोरै नै भएपनि केही संस्कृति निर्माण र विकास गर्ने परम्पराको निरन्तरता रहेको देखाउँछ। अर्कोतर्फ यस समयमा तुलनात्मक रूपले बढी गीत एवं भजनगीतहरूको सिर्जना भएको पाइन्छ भने रणबहादुर शाह, गीर्वाणयुद्ध शाह, राजेन्द्र विक्रम शाह आदिको पालामा रचित विभिन्न स्तुति गानले अघिल्लो समयको साहित्यिक सिर्जनालाई अघि बढाएको प्रष्टिन्छ।

यसप्रकार थिमि नगरको ऐतिहासिक वस्तुस्थितिलाई अध्ययन गर्ने क्रममा यो नगर तीनवटा शासनपद्धतिअन्तर्गत विकास भएको पाइन्छ। यसको अस्तित्व र विकासको शुरुवात लिच्छविकालमा भएको देखिन्छ भने यसै कालमा एउटा व्यवस्थित बस्तीको आकारसमेत ग्रहण गरिसकेको अध्ययनबाट देखिन्छ। ऐतिहासिक सामग्रीको अभावले करिब ७०० वर्षको अवधि शून्य समयमा बितेको यस नगरसम्बन्धी थप प्राचीन जानकारी प्राप्त हुन नसकेपनि नेसं ४७० देखि विभिन्न ऐतिहासिक सामग्रीहरूले यसको मल्लकालीन प्रारूपलाई किटान गरेको छ। प्राप्त सामग्रीहरूको अध्ययन र विश्लेषणबाट नगरको तात्कालीन स्वरूप र विकासलगायत तात्कालीन जनजीवनको सांस्कृतिक, आर्थिक र सामाजिक पक्षको समेत राम्रो चित्रण पाइन्छ। जसअनुसार नेसं ७०० सम्मको अवधिमा थुप्रै ऐतिहासिक र सांस्कृतिक महत्वका मन्दिर तथा संरचनाहरूको निर्माण, पुन:निर्माण भएको पाइन्छ भने नेसं ९०० सम्म आईपुग्दा यहाँ थुप्रै सङ्ख्यामा स-साना मन्दिर, पाटी, धारा, पोखरी, डबली आदिको निर्माण भएको पाइन्छ। त्यसैको उपज स्वरूप साहित्यिक सिर्जनाको समेत पर्याप्त विकास भएको थाहा हुन्छ। जसको आधारमा नेसं ८००-९०० को अवधिलाई थिमिको स्वर्णयुगको रूपमा लिन सकिन्छ। नेसं ९०० देखि भने पाटी, सतलजस्ता संरचनाहरूको निर्माणमा शिथिलता छाएको देखिएतापनि अघिल्ला समयको विकासक्रमलाई परम्परागत ढङ्गले केही निरन्तरता दिएको पाइन्छ।

००००००

अध्याय-तीन

# थिमि शब्दको विकासक्रम

थिमि शब्दकोबारेमा धेरै छलफल र विश्लेषणहरू हुँदै आएको पाइन्छ। यो नगर लिच्छविकाल मै स्थापित भइसकेको तथ्यले यसको अनुसन्धानलाई अझबढी चाखपूर्ण बनाएको छ। थिमि शब्दको सम्बन्धमा धेरै जना लेखक, अनुसन्धानकर्ता र बुद्धिजिवीहरूले आ-आफ्ना तर्क र विश्लेषणलाई विभिन्न समयमा प्रस्तुत गर्दै आएको पाइन्छ। ती मध्ये केही किंवदन्तीमा आधारित तर्कहरूको बारेमा उल्लेख गर्नु अनुपयुक्त नहोला।

*पहिलो किंवदन्ती:* उहिले थिमि लायकूको मूल ढोका अगाडि एउटा मण्डप थियो रे जहाँबाट निरन्तर आगोको ज्वाला निस्किरहेको हुन्थ्यो। यसलाई सबैले *"थीगु मिँ"* (नेपालभाषाको यस शब्दको अर्थ बलेको आगो हो) भन्ने गर्थ्यो पछि यसैबाट यस क्षेत्रलाई थिमि भन्न थाल्यो।

*दोस्रो किंवदन्ती:* थिमि एउटा उच्च भू-भागमा अवस्थित बस्ती हो। जसरी औंठीमा वरपर भन्दा बीचको भाग *(नगिना* रहेको भाग) अलिक उठेको हुन्छ। यसैअनुसार औंठीको *नगिना (थि)* झै उठेको देखिने हुनाले यस क्षेत्रलाई *थिदे* अर्थात् *नगिना जस्तो देश* भन्न थाले। पछि यही शब्द प्रचलनमा रह्यो र *यँदे* (काठमाडौं) बस्नेलाई *यँमि* (काठमाडौंबासी), *भ्वँदे* (बनेपा)मा बस्नेलाई *भ्वँमि* (बनेपाबासी) भन्ने गरिए झैं *थिदे* (थिमि) मा बस्नेलाई *थिमि* (थिमिबासी) भन्न थालियो। कालान्तरमा यही शब्द देश वा यस क्षेत्रको नामले प्रचलित भयो।

यी किंवदन्तीहरूको आधार लिएर थिमिको नामाङ्करणको सम्बन्धमा चर्चा गर्ने हो भने थिमिको इतिहासलाई मल्लकालसम्म मात्रै सीमित गर्दछ

जबकि यसको प्राचीनता लिच्छविकाल फैलिएकोबारे माथि नै स्पष्ट भइसकेको छ तसर्थ यी किंवदन्तीहरू रोचक लागे पनि मनगढन्ते तर्क भन्दामाथि उठ्न सकेको पाईदैन । थिमि नगर लिच्छविकालमा नै पूर्ण व्यवस्थित भइसकेको कुरालाई पुनः उल्लेख गरिरहनु पर्ने आवश्यक नदेखिए पनि थिमिलाई लिच्छविकालीन बस्तीको रूपमा पुष्टि गर्ने आधारशिला बनेको शिलालेख आंशिक रूपमा मात्रै पढ्न सकिने गरी बिग्रिसकेको हुँदा त्यसमा थिमि शब्द उल्लेख भए नभएको यकिन गर्न सकिएको छैन । यद्यपि यसमा उल्लेख रहेका वसुधा, खातम्पल्ली स्थानसमेत खुल्न सकेको छैन । त्यस्तै बोदेमा प्राप्त शिलालेखमा पनि लुन्श्री प्रदेश, [illegible]प्रिङग्राम, दुप्रङग्रामजस्ता स्थानको नामोच्चारण पाइन्छ ।[३६] तर यी नामले पनि हालको कुन ठाउँलाई जनाउँदछ भन्ने कुरा अज्ञात नै छ ।

थिमि शब्दकै अनुसन्धानको क्रममा देउपाटनमा फेला परेको शिलालेखले महत्वपूर्ण भूमिका खेलेको छ । देउपाटन स्थित रत्नेश्वर शिवलिङ्ग नजिकै घर निर्माणको क्रममा शिवलिङ्गसहित फेला परेको सं. ४०७ को उक्त शिलालेखमा "दयितापल्लि, थेम्मृङग्राम" उल्लेख छ ।[३७] सोही शिलालेखमा "बोसिङग्राम" शब्दसमेत परेबाट सो बोसिङ शब्दले हालको बोदे र थेम्मृङ शब्दले थिमिलाई इंगित गर्दछ । यसरी लिच्छविकालमा थेम्मृङग्राम नामले परिचित यो नगरलाई कालान्तरमा थिमि भन्न थालेको देखिन्छ । हालको ख्वप (नेवारहरू भक्तपुरलाई स्थानीय मातृभाषामा ख्वप भन्ने गर्दछन्) को प्राचीनतम नाम ख्वपृङ, म्हेपीको म्हसपृङ, नालाको नालङ, भए झैं थिमिलाई पनि प्राचीनकालमा थेम्मृङ भनिन्थ्यो भन्ने कुरा निर्विवाद भएको छ ।

थिमिसम्बन्धी उल्लेख रहेको, उक्त मानदेवकालीन शिलालेख पश्चात् थप जानकारी प्राप्त हुने अरू लिच्छविकालीन सामग्रीहरू फेला परेको छैन् । एकैचोटी करिब ७०० वर्षको अन्तरालपछि थिमि शब्द उल्लेख भएको

३६. धनवज्र वज्राचार्य - लिच्छविकालका अभिलेख । कीर्तिपुर : ने. तथा ए. अ. के : विसं २०३०, पृ. ५२७- ५२८ ।

३७. श्यामसुन्दर राजवंशी - "देवपातनको विमलसङ्घको अभिलेख" । रोलम्बा मिलेनियम इस्यु (ईसं २०००) पृ. १८०-१८१ ।

मल्लकालीन पहिलो सामग्रीको रूपमा गोपालराज वंशावली भेटिएको छ। उक्त वंशावलीको ५२ औं पत्रमा उल्लेख भएको नेसं ४७० को एउटा घटनामा थिमि शब्दलाई "थ्यंमी" लेखिएको पाइन्छ।[३८] "थ्यंमी" र "थेम्मृङ" मा रहेको सामञ्जस्यतालाई हेर्दा थेम्मृङ शब्द नै समयान्तरसँगै अपभ्रंस भएर "थ्यंमी" भएको प्रष्ट हुन्छ।

त्यस्तै गोपालराज वंशावलीको नेसं ४९२, ४९६, ५०० का विभिन्न घटनावलीमा थ्यंमी लेखेको पाइन्छ भने सिभाटोलको बाखाछें महादेव मन्दिरमा प्राप्त नेसं ५६(१) को शिलापत्रमा "थेमिदेस" उल्लेख छ।[३९] थेमिदेस उल्लिखित अरू सामग्रीहरूमा विभिन्न समयका तमसुकहरू रहेका छन्। नेसं ६३५ को तमसुकमा पहिलो पटक "थेमिमधेस्थान" भेटिएको छ।[४०] तत्कालीन मल्ल राज्यहरूको बीचमा रहेको भू-भाग भन्ने जनाउन थिमिलाई विशेषणको रूपमा मधेस्थान प्रयोग गरिएको देखिन्छ। यस शब्दको प्रयोग करिब ५५ वर्षसम्म अर्थात् नेसं ६९० सम्म निरन्तर देखिन्छ यद्यपि यस बीचका २-३ वटा तमसुकमा थेमि मात्रै पनि लेखिएको पाइन्छ। परिमार्जन हुने क्रममा उक्त "मधेस्थान" शब्द नै मध्यपुरी स्थान भएको थाहा हुन्छ। मध्यपुरी स्थानलाई कतै कतै मध्यपुलिस्थान पनि भनिएको छ जेहोस् नेपालभाषामा 'ल' र 'र' बीचको अन्तरसम्बन्धको कारण यो भिन्नता देखिएको हो। नेसं ६९० देखि ८५० सम्मको २० वटा जति तमसुकमा यो शब्दको प्रयोग देखिन्छ। यसरी समयान्तर सँगै परिमार्जित हुने क्रममा ८०० को हाराहारीबाट मध्यपुर उल्लेख गरिएको पाइन्छ। नेसं ८०८ को शिलालेखमा देखिएको यो शब्द पनि मध्यपुल भएको पाइन्छ। मध्यपुर मात्रै उल्लेख रहेको ८ वटा जति शिलापत्र नेसं ८६८ सम्मको पाइएको छ भने यसपछि नेसं ९०० सम्मको ४

३८. धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल - द गोपालराज वंशावली। काठमाडौं : नेपाल रिसर्च सेन्टर : ईसं १९८५, पृ १०८, ६६०।

३९. शङ्करमान राजवंशी- भक्तपुर शिलालेख सूची। काठमाडौं : वीर पुस्तकालय विसं २०२०, पृ ६, ७।

४०. पूर्णरत्न वज्राचार्य - "भूमिसम्बन्धी केही तमसुक ताडपत्र"। अभिलेख-५ : (विसं २०४५), पृ ५८।

वटा जति शिलापत्रमा मध्यपुर थान्य, मध्यपुरस्थान आदि भएको पाइन्छ। त्यस्तैगरी विभिन्न समयमा रचिएका गीत, भजनगीतहरूमा पनि मध्यपुर नै विशेषरूपमा प्रयोग भएको पाइन्छ। मध्यपुर थिमि क्षेत्रमा प्राप्त पुरानो भजनगीतहरूमा सबभन्दा पुरानोको रूपमा प्राण मल्लको पालामा रचित भजन गीत एउटा पाइएको छ[४१] भने त्यसपछि अरू सबै नेसं ८०० पछाडिको रहेको छ। यी गीतहरूमा प्राय सबै जसोमा मध्यपुर नै प्रयुक्त भएको छ। यसरी प्राप्त लिखित सामग्रीहरूमा नेसं ७०० को शुरुवातबाट मध्यपुर शब्दको वर्चश्व कायम रहेको पाइन्छ। स्थानीय बोलीचालीमा थिमि (थिमि) शब्द नै प्रयोगमा रहेको कुरा नेसं ७०७, ८५३, ९३०, ८५१ मा तमसुक, शिलापत्रहरू र भजनगीतमा थेमि मात्रै उल्लेख भएबाट पुष्टि हुन्छ। प्रयोग गर्दै जाने क्रममा नेसं १०३० देखि थिमि लेख्न थालिएको कुरा उक्त समयमा रचित भजन गीतमा थिमि उल्लेख भएबाट पुष्टि हुन्छ[४२]। बोदे महालक्ष्मी मन्दिरको दक्षिण तर्फ राखिएको नेसं ८९५ को ताम्रपत्रमा पनि थिमी प्रयोग भएको छ[४३] र हालसम्म पनि जनजिब्रोमा थिमि नै स्थापित रहेको छ। यस्तैगरी स्थानीय चलनचल्तीमा बुढापाकाहरू यसलाई थिदे पनि भन्ने गर्दछन् तर इतिहासमा कतै पनि थिदे उल्लेख नहुनुले यसलाई उच्चारण गर्ने क्रममा अपभ्रंस भएर थि(मि)दे=थिदे हुन पुगेको भन्न सकिन्छ।

थेमि शब्द परिमार्जित र अपभ्रंस हुँदै जाने क्रममा शाहकालको शुरुवात पछिका केही वर्षदेखि ठीमि लेख्न थालिएको देखिन्छ। नेसं ९६५ को तमसुकमा ठिमि प्रयोग गरिएको पाइएबाट उक्त कुरा पुष्टि हुन्छ र यसपछि नेसं ९९४ र १०१४ को ताम्रपत्रमा ठीमि लेखिएको पाइन्छ त्यस्तै नेसं ९९८ को गुंडु, भक्तपुरमा पाइएको शिलापत्रमा पनि ठिमि प्रयुक्त गरिएको पाइन्छ।

---

४१. छत्रबहादुर कायष्ठ - थिमि देय्या पुलांगु म्ये। मध्यपुर : मध्यपुर क्षेत्र विकास मञ्च : विसं २०५५, पृ. १।

४२. छत्रबहादुर कायष्ठ - थिमि देय्या पुलांगु म्ये। मध्यपुर : मध्यपुर क्षेत्र विकास मञ्च : विसं २०५५, पृ. १३।

४३. सूर्यराम श्रेष्ठ (सं) - ऐतिहासिक सहर बोडे एक परिचय। बोडे : भी पुचः सफूधुकू : विसं २०५७, पृ. १०९।

तर ठिमी या ठीमि शब्द भाषिक भिन्नताको कारण हुने उच्चारणको फरकले मात्रै प्रयोगमा आएको देखिन्छ। नेपाली भाषा प्रयुक्त सामग्री मात्रै ठिमी लेखेको पाइनुले यस भनाइलाई पुष्टि गर्दछ।

यसप्रकार परिमार्जित र अपभ्रंस हुने क्रममा विभिन्न कालखण्डमा थिमि शब्दलाई विविध प्रारूपमा ढालेर सम्बोधन र लेखन गरिएको भेटिन्छ। यसलाई प्रस्तुत तालिकालें प्रष्ट पार्ने प्रयास गरिएको छ। (हे. परिशिष्ट ख) यसबाट के देखिन्छ भने तमसुकहरूमा थेमि र मध्यपुरिस्थान मात्रै प्रयोग गरिएको छ भने शिलालेखहरूमा थेमि यदाकदा मात्र देखिए तापनि मध्यपुरिस्थानको कतै उल्लेख पाईंदैन बरु शिलालेखहरूमा मध्यपुर वा मध्यपुर थान्य लेखिएको पाइन्छ। फेरि यी शब्दहरू तमसुकमा लेखिएको पाईदैन। त्यस्तै नेपाली भाषा प्रयोग गरिएको शिलापत्र र ताम्रापत्रमा मात्रै ठीमि लेखिएको पाइन्छ।

प्रस्तुत तथ्याङ्क र माथिका विश्लेषणको अधारमा थिमिलाई समष्टिगत रूपमा दुईवटा नामवाट सम्बोधन गर्दै आएको पाईन्छ। लिच्छविकालमा थेम्मृङ ग्राम नामले चिनिने यो क्षेत्रलाई मल्लकालको पूर्वाधमा आईपुग्दा "थ्यंमी" भन्न थालिएको पाइन्छ र यही थ्यंमी शब्द कै विविध रूप जस्तै थेमि, थ्यंमी, थेमिमध्येस्थान, थेमिदेश आदि नेसं ७०० सम्म प्रयोगमा रहेको देखिन्छ। नेसं ६३५ बाट "बीच भागमा पर्ने क्षेत्र मध्यस्थान" भन्ने आशयबाट प्रयुक्त हुन थालेको "थेमि(म)धेस्थान" ले निरन्तरता पाउँदै नेसं ६९० मा आइपुग्दा "मध्यपुरीस्थान" भएको पाइन्छ यद्यपि यस अवधिसम्म "थेमि" नै प्रमुख रूपमा प्रयोग गरिएको पाइन्छ। तर नेसं ६९० बाट ९०० सम्म मध्यपुरीस्थान, मध्यपुलस्थान देश इत्यादि विविध रूपमा प्रयोग भएपनि मध्यपुर शब्द नै व्यापक प्रयोगमा रहेको देखिन्छ। यसबीचमा थेमि, थिमी सँगसँगै शाहकालको शुरुवात पश्चात् ठीमि शब्द पनि यदाकदा देखिएको छ। साथै थेमि, थिमी उल्लिखित फाटफुट सामग्रीहरूको निरन्तर प्राप्त भइरहेको र हालसम्म पनि जनजिब्रोमा "थिमि" नै निविकल्प भै भएर प्रयोग हुदै आएकोले मल्लकालको पूर्वाद्धदेखि स्थानीय बोलीचालीमा थेमि वा थिमि

शब्द नै स्थापित रहेको प्रष्ट हुन्छ भने मध्यपुर शब्द लेख्य परम्परा वा प्रशासनिक कार्यमा मात्रै प्रयुक्त हुँदै आएको देखिन्छ ।

यसरी ऐतिहासिक शब्द अथवा भनौं ऐतिहासिक महत्व बोकेको शब्द र स्थानीय जनजिब्रोमा अभ्यष्ट भइसकेको शब्द "थिमि" लाई नै पुनःस्थापित गर्नुपर्ने सुझाव सहित मालेकुले संस्था मार्फत नगरपालिका गठन लगत्तै सम्बन्धित कार्यालयमा ज्ञापनपत्र समेत बुझाएको कुरालाई यहाँनिर उल्लेख गर्दा अतिशयोक्ति नहोला । फलतः अहिले न.पा. लगायत स्थानीय चलनचल्तीमा "ठिमी" शब्दलाई विस्थापित गरेर पुनः थिमि नै प्रयोग गर्ने प्रचलन स्थापित भइसकेको छ भने राष्ट्रियस्तरमा प्रयोग हुने विभिन्न समय, स्थान र सामग्रीमा अझै पनि ठिमी नै लेख्ने प्रचलन अद्यावधि रहेपनि क्रमशः सुधार भइरहेको देखिनु सन्तोषजनक भएको छ ।

●●●●●●

अध्याय-चार

# ऐतिहासिक सिमाङ्कन

## ४.१ सामान्य परिचय

थिमि लिच्छविकालमै थेम्मृङ ग्राम नामले व्यवस्थित बस्तीको रूप लिई सकेकोबारेमा अघिल्लो खण्डमा नै चर्चा भइसकेको छ । यही प्राचीनताले यससँग सम्बन्धित खोजलाई कौतुहलपूर्ण र महत्वपूर्ण बनाएको छ । तसर्थ थिमिको ऐतिहासिक पक्षको अध्ययनको क्रममा यसको ऐतिहासिक सिमाङ्कनको विश्लेषण पनि अत्यन्त चाखपूर्ण भएको छ । यसअन्तर्गत मध्यपुर थिमिको वर्तमान सीमाङ्कनबारे परिचयकै क्रममा व्याख्या गरिसकेको छ । यसमा थिमिको ऐतिहासिक सिमाङ्कन, यसको उद्गम क्षेत्र, यसको सांस्कृतिक र ऐतिहासिक प्रभात्र आदिको सम्बन्धमा खोतल्ने प्रयास गरिएको छ । विश्लेषणको क्रममा मूलतः दुईवटा पक्षको आधारमा केलाउनु अझ प्रष्ट हुनेछ ।

**क) सांस्कृतिक पक्षको आधार**

**ख) लिखित सामग्री को आधार**

देवपाटनको शिलालेखमा अङ्कित थेम्मृङ ग्रामले थिमिलाई नै स्पष्ट ईंगित गरेतापनि यसको सीमारेखाबारे सङ्केत मिल्ने कुनै आधार यसमा देखिदैन तथापि देउपाटनसम्मको शिलालेखमा यसबारे उल्लेख हुनु निश्चय नै अनुसन्धानमूलक देखिन्छ ।

लिच्छविकालपछि करिव ७०० वर्षको अवधि यहाँ कसरी गुज्रे भन्नेवारे कुनै प्रकारको ऐतिहासिक सामग्री हालसम्म फेला पर्न सकेको छैन त्यसैले उक्त अवधि इतिहासको पानामा अन्धकारयुग बनेर रहेको छ । त्यसपश्चात् एकैचोटी मल्लकालमा आएर गोपालराज वंशावलीले थिमिसम्बन्धी जानकारी

दिन्छ। यसमा उल्लिखित नेसं ४७०, ४९२, ४९६ र ५०० को छुट्टाछुट्टै घटनावलीले थिमिको अस्तित्व किटान गरेको छ।"[44] यद्यपि उक्त सामग्रीले थिमिको सीमाङ्कन र बस्तीको सम्बन्धमा भने कुनै जानकारी प्रदान गरेको पाईंदैन। यसप्रकार नेसं ४९६ सम्म अस्पष्ट रहेको थिमि बस्तीको सीमाङ्कनलाई यसपछि प्राप्त भएका थुप्रै ऐतिहासिक सामग्री एवं स्थानीय सांस्कृतिक पक्षहरूको विश्लेषण र अध्ययनले धेरै हदसम्म रेखाङ्कन गरेको छ। जसको आधारमा विभिन्न समयमा थिमि बस्तीको सिमारेखा र यसको प्रभाव क्षेत्रलाई लिपिवद्ध गरी थिमिको उद्गम बस्तीदेखि वृहत्तर थिमिकोसमेत रेखाङ्कन गर्न सकिन्छ।

## ४.२ सांस्कृतिक पक्षको आधार

सांस्कृतिक पक्षको आधारमा विश्लेषण गर्दा यहाँको महत्वपूर्ण जात्रा, पर्व, धार्मिक र सांस्कृतिक केन्द्र आदिसँग यसको सम्बन्ध कस्तो छ, ती केन्द्र वा स्थलहरूको अवस्थिति कहाँ छ, यहाँको विभिन्न स्थानहरूको नामले कस्तो वा कुन क्षेत्रलाई इंगित गर्दछ यावत कुराहरूलाई केलाउनु पर्दछ। यसरी विवेचना गरेर हेर्न निम्न उल्लिखित बुँदाहरूलाई आधारको रूपमा लिन सकिन्छ।

अ) **अष्टमातृका प्रतिस्थापन**

आ) **छ्वासो सङ्ख्या**

इ) **बिस्का जात्रा**

ई) **थिमिको जिब्रो छेड्ने जात्रा**

उ) **भक्तपुरको नवदुर्गा नाच**

ऊ) **मृत्यु संस्कारमा शव लाने परम्परागत मार्ग**

ए) **थिमि लाय्कूको अवस्थिति**

ऐ) **देय्बौको मार्ग**

ओ) **प्रमुख धार्मिक केन्द्रको अवस्थिति**

---

४४. धनवज्र वज्राचार्य र कमलप्रकाश मल्ल - द गोपालराज वंशावली। काठमाडौं : नेपाल रिसर्च सेन्टर, ईस १९८५, पृ. ६६०, ६३, ६५, ६६।

### क) अष्टमातृका प्रतिस्थापन

पुरानो नेवार बस्तीको एउटा विशेषता अष्टमातृका प्रतिस्थापना हो । आफ्नो बस्तीको अनिष्टकारी तत्वहरूबाट बचाउन वा सुरक्षित राख्न बस्तीको वरिपरि आठैवटा दिशामा शक्तिपीठहरू प्रतिस्थापन गरिएको हुन्छ ।[४५] अष्टमातृकाअन्तर्गत कुमारी, ब्रह्मायणी, रुद्रायणी, महालक्ष्मी, चामुण्डा, बाराही, वैष्णवी, ईन्द्रायणी पर्दछ । यी शक्तिपीठ (अष्टमातृका)हरू बस्ती बाहिर पर्नेगरी स्थापना गरिएको हुन्छ । अध्ययनको क्रममा शक्तिपीठहरू ऐतिहासिक थिमि बस्ती बाहिर नै रहेको पाइन्छ । कुमारी स्थापना गरिएको क्वलाखु टोल बस्तीको छेउमा रहेको र यो क्षेत्र पहिले धान सुकाउनको निम्ति प्रायशः प्रयोग हुने खंला वा चौरको रूपमा रहेको कुरा बुढापाकाहरू बताउँछन् । यस सम्बन्धमा बालकुमारीको उकालो पूर्वतिर रहेको वनमा स्थापित चिबाःद्यः (वनदेवी)लाई पनि अष्टमातृका मध्येको कुमारी भएको बताइन्छ ।[४६] हुनत यसलाई कुमारीको नामबाट पनि सम्बोधन गर्ने गरेको पाइन्छ । यदि यसो हो भने उक्त कुमारी हालसम्म बस्ती बाहिर नै रहेको छ । यस्तैगरी इन्द्रायणी (इनाय्लाछि टोलको पश्चिमपट्टी सिउचाक्वमा रहेको पीठ), महालक्ष्मी (चोदे), ब्रह्मायणी (पर्सिक्व टोल), बाराही (दक्षिण बाराही), वैष्णवी (सुङ्गा टोलको विष्णुवीर) आदि पीठहरू अहिले पनि बस्ती बाहिर नै रहेको छ भने जंलाटोलको रुद्रायणी हाल बस्ती भित्र देखिए पनि उक्त बस्ती नेसं ७०० पछि विस्तार भएको कुरा अगाडि नै चर्चा भइसकेको छ ।

### आ) छ्वासो सङ्ख्या

नेवारी बस्तीको अर्को विशेषताको रूपमा छ्वासोलाई पनि लिइन्छ । छ्वासो भन्नाले सामान्यतयाः दुई वा दुई भन्दा बढी बाटाहरू जोडिने ठाउँ

---

४५. धर्मसुन्दर वज्राचार्य - "थिमिसम्बन्धी ऐतिहासिक शिलालेख एक सिहांवलोकन" । ल्यायम्ह (नेस ११२०), पृ. ८ ।

४६. स्थानीय बज्राचार्यहरूले नवरात्रीमा अष्टमातृका दर्शनको बेला यसलाई पनि कुमारी रूपमा लिएको पाइन्छ । अर्कोतर्फ वैशाख सङ्क्रान्तीको दिन यस मन्दिरमा पनि पूजा गर्ने र गरगहनाले सिंगार्ने प्रचलन रहेकोछ ।

दोबाटो, चौबाटो आदिलाई जनाउँदछ । विभिन्न टोलहरूको अथवा निश्चित क्षेत्रको आ-आफ्नो छुट्टाछुट्टै हुने यो ठाउँ विभिन्न प्रयोजनको लागि बनाएको हुन्छ । जस्तो कि कोही व्यक्ति मरेको खण्डमा उक्त व्यक्तिले लगाएको लुगा एकजोर सहित ४ वटा कांचो ईंता मुर्दा लानु अगाडि यही छ्वासोमा फाल्ने गरिन्छ । त्यस्तै गथांमुग: चऱ्हे (घण्टाकर्ण)को दिन घर सुद्धि गर्ने परम्परा नेवार संस्कृतिमा रहेको पाइन्छ । जसअनुसार घरको प्रत्येक कुनामा माटो (एक चिम्टी जति) निकालेर पुन: त्यहाँ गोबरले टालेर पूजा गरिन्छ र त्यसपछि छ्वालीको मुठ्ठामा सिस्नु, कर्कलो, च्वाकँ आदि घुसारेर बालिन्छ । त्यसरी बालेको छ्वालीले घरको सम्पूर्ण ठाउँ सेकाएर अघि निकालेको माटो सहित छ्वासोमा लगेर फाल्ने गरिन्छ । यस प्रकार नेवार समाजमा छ्वासोको विशेष महत्व रहेको हुन्छ । अध्ययनको क्रममा यी छ्वासोहरूको सङ्ख्या क्वालाखु र दिगुटोल बीचको क्षेत्रमा बाक्लो रहेको पाइन्छ भने यस बाहेकका अन्य बस्ती जस्तो भूलांखेल, चपाचो र बाहाखा आदि क्षेत्रमा न्यून रहेको पाइन्छ ।[४७]

### इ) बिस्का जात्रा

पुरानो थिमि बस्तीको सन्दर्भमा बिस्का जात्रा र जिब्रो छेड्ने जात्राको महत्वपूर्ण भूमिका रहेको देखिन्छ । बिस्का जात्रा सौर्यमास अनुसार हरेक वर्षको चैत्र मसान्तबाट प्रारम्भ भई बैशाख १ र २ गते तीन दिनसम्म मनाइन्छ । यो जात्रा दशैं पछिको ठूलो चाँड हो र यस जात्रामा थिमिलगायत नगदेश, बोदे, तिगनिबाट समेत देवीदेवतामा खतहरू सहभागी भई जात्रा गर्ने गरिन्छ । यसलाई तीन दिनसम्म चल्ने यस जात्राको प्रत्येक दिनको जात्राको नेतृत्व र मार्ग परम्परागत रूपमै निधारित गरिएको छ भने वैशाख २ गतेको जात्राको नेतृत्व बालकुमारीले गर्दछ र यसको मार्ग अथवा परिक्रमा गराइने क्षेत्र क्वलाखुदेखि दिगुटोलसम्म रहेको छ । जात्रामा सहभागी गराइने सम्पूर्ण खत बालकुमारीको प्राङ्गणमा भेला भएर शुरु हुने यस जात्राले नगर परिक्रमा गर्ने क्रममा थिमिको मूल बाटो हुँदै दिगुटोलसम्म ल्याइन्छ र पुन:

४७ Pant, Mohan - A study of the spacial formation of kathmandu valley towns the case of study. March, 2002, pp. 109.

बालकुमारी पुऱ्याइन्छ । क्वलाखुदेखि दिगुटोलसम्मको परिक्रमाको यो क्रम ३ चोटीसम्म दोहोऱ्याएपछि जात्रा सम्पन्न हुन्छ ।[४८] यसरी महत्वपूर्ण ऐतिहासिक जात्रा उक्त क्षेत्रमा मात्र सीमित हुनुले प्रारम्भतिर सो क्षेत्रमा मात्रै बस्ती रहेको र यस बाहिरको क्षेत्रमा बस्ती नरहेको देखिन्छ किनकी जात्रा निर्विवाद रूपमा बस्ती भित्र नै गरिन्छ ।

## ई) थिमिको जिब्रो छेड्ने जात्रा

थिमिको अर्को महत्वपूर्ण संस्कृति जिब्रो छेड्ने जात्रा पनि हो । हुनत जिब्रो छेड्ने जात्रा भन्ने बित्तिकै बोदेको जात्रा भन्ने लाग्न सक्छ । किनकि बोदेको जिब्रो छेड्ने जात्राको निरन्तरताले एउटा प्रसिद्धि कमाइसकेको छ । तर थिमिमा पनि जिब्रो छेड्ने जात्रा हुन्छ भन्ने कुरा कमैलाई मात्र थाहा होला । बोदेको उक्त जात्रा वैशाख २ गते मनाइन्छ भने थिमिको जिब्रो छेड्ने जात्रा चन्द्रमासअनुसार भाद्र शुक्ल पक्ष अर्थात् यन्याः पुन्हिको दिनमा मनाउने गरिन्छ ।[४९] इच्छाएको व्यक्तिले आफ्नो स्वेच्छाबाट नातु (फलामको सियो) द्वारा आफ्नो जिब्रो छेडेर शुरु हुने उक्त जात्रा नगरका विभिन्न ठाउँ परिक्रमापश्चात् क्वलाखुको बालकुमारी मन्दिर पुगेर उक्त नातु झिकेपछि जात्रा सम्पन्न हुन्छ । यो जात्रा थिमिको दिगुटोलको भैरव मन्दिर अगाडि जिब्रो छेडेर शुरु हुन्छ भने जात्रा सम्पन्न हुने स्थान क्वलाखुको बालकुमारी क्षेत्र भएबाट पनि पुरानो थिमि नगरको परिधि दिगुटोलदखि क्वलाखुसम्म मात्रै फैलिएको बुझिन्छ ।

## उ) भक्तपुरको नवदुर्गा

साँस्कृतिक पक्ष कै विश्लेषणमा भक्तपुरको नवदुर्गाले पनि ठूलो महत्व दर्शाउँछ । प्रत्येक वर्ष योमरी पुन्हिको दिनदेखि चार दिनसम्म बोदे,

---

४८. राजेन्द्र (तूबन्जाः) श्रेष्ठ - "मध्यपुर थिमि बिस्का जात्रा"। थेम्मृङ अङ्क-१० (विस २०६०), पृ ३-३२ ।

४९. विगत २५ वर्षदेखि रोकिएको यो जात्रामा स्थानीय कृष्ण नानिचा श्रेष्ठले जिब्रो छेडेपछि सञ्चालनमा आएको थियो । तर उनले पनि दुई पल्टसम्म जिब्रो छेडेर छोडेपछि अहिले पुनः रोकिन पुगेको छ ।

नगदेश, तिगनिलगायत नगरका टोलटोलमा पुगेर पूजा थाप्ने गरिन्छ। यसरी पूजा थाप्ने क्रममा उक्त चार दिनसम्म क्वलाखुको सतलमा बास बस्ने गर्दछ। यस अवधिभर सम्पन्न गरिने महत्वपूर्ण सांस्कृतिक क्रियाकलाप जस्तो कि न्या लाकिगु, ख:तेलिगु, बाहाँ लिकिगु, सुति भैल: ल्हुइकेगु आदि सांस्कृतिक कार्य सम्पन्न गरिन्छ।[५०] यसबाहेकका चपाचो, नगदेश, बोदेलगायतका क्षेत्रमा पूजा थाप्ने कार्यमात्रै हुने गरेको पाइन्छ। यसप्रकार नवदुर्गाद्वारा गरिने प्रमुख साँस्कृतिक सबै कार्य उक्त सीमित क्षेत्रमै केन्द्रित रहनुले पनि उक्त क्षेत्रलाई ऐतिहासिक थिमिको उद्गम मान्न सकिन्छ।

### ऊ) मृत्यु संस्कारमा शव लाने परम्परागत मार्ग

थिमिको प्रारम्भिक क्षेत्रको सम्बन्धमा स्पष्ट पार्न मृत्यु संस्कारको क्रममा शव लाने परम्पराले पनि महत्वपूर्ण भूमिका खेलेको पाइन्छ। थिमिका कोही व्यक्तिको मृत्यु भएमा हनुमति खोलाको दुइँदिप (मसान) वा दक्षिणबाराही मन्दिरनिरको दिप (मसान)मा लगेर दाह संस्कार गरिन्छ।[५१] यसमा दुईवटा पक्ष के देखिन्छ भने दिगुटोलदेखि क्वलाखु क्षेत्रसम्मका बान्सिदाको मृत्यु भएमा शवलाई थिमिकै मूलबाटो भएर क्वालाखु ओरालो हुँदै मसान पुऱ्याइन्छ। यस क्षेत्रभन्दा बाहिरका अर्थात् दिगुटोल भन्दा उत्तरतिरका क्षेत्र हात्तिमहांकालदेखि नगदेशसम्मका[५२] व्यक्तिको मृत्यु भएमा शवलाई हात्तिमहांकालको बाटो भएर भुलांखेलको जलाखु ओरालो, लाबादो, बपाको

---

५०. न्या लाकिगु कार्य दथुटोलदेखि बालकुमारीसम्मको क्षेत्रमा गरिन्छ भने ख:तेलेगु कार्य दिगुटोल, लायक्, दथुटोल र मरुटोलमा गरिन्छ। त्यस्तै अन्तिम दिनको बेलुकी मरुटोलको लोकेश्वर मन्दिर अगाडि सुति भैल: (स्वेत भैरव) नचाउने गरिन्छ।

५१. यसरी मसान प्रयोग गर्ने क्रममा विभिन्न जातका समुदायको छुट्टाछुट्टै मसानको व्यवस्था भएको पाइन्छ। जस्तै श्रेष्ठ, वज्राचार्य, ब्राम्हणहरूले दक्षिणबाराही मसान; प्रजापति, ज्यापूहरूले दुइंदिप; कुस्लेहरूले बपाको पूर्वतिरको खुल्ला क्षेत्र; मानन्धर, रंजितलगायतले हनुमन्ते पुलनिरको मसान प्रयोग गर्दछन्।

५२. केही वर्षअघिदेखि नगदेशका बासिन्दाहरूको मृत्यु भएमा थिमिको दुइंदिपमा लाने प्रचलन हराइसकेको छ। यसको विकल्पमा नगदेशको उत्तर-पश्चिमपतिरको मनोहरा खोलामा नयाँ मसान निर्माण गरी दाहसंस्कार गर्ने गरेका छन्।

बाटो हुँदै मसान पुऱ्याइन्छ । यसरी यी दुई क्षेत्रको यो भिन्नतालाई विश्लेषण गर्ने क्रममा एउटा परम्परागत मान्यता के भेटिन्छ भने नेवार समाजमा बस्ती बाहिर कसैको मृत्यु भएमा शवलाई बस्तीभित्र ल्याउनु हुँदैन[५३]। यो परम्परा हालसम्म पनि सोही अनुरूप कायम रहेको छ । यसबाट के पुष्टि हुन्छ भने दिगुटोलदेखि उत्तरको क्षेत्र र नगदेश ऐतिहासिक थिमि बस्ती भन्दा बाहिरको बस्ती वा क्षेत्र हो । विभिन्न शिलालेखको विश्लेषणबाट पनि उक्त क्षेत्रहरू समयको अन्तरालसँगै जनसङ्ख्या वृद्धिको चापले विस्थापति मानिसहरूबाट नेसं ७०० पछि मात्र विस्तार भएको कुरा माथि नै प्रष्ट पारी सकिएको छ ।

### ए) थिमि लायक्‌को अवस्थिति

थिमिको प्रमुख सांस्कृतिक केन्द्रविन्दुको रूपमा लायक्‌ (हालको आदर्श मा.वि.) को महत्व निकै वृहत्तर रहेको छ । यहाँको प्रमुख चाडपर्व र संस्कृति जस्तै, दशैं, बिस्का जात्रा, भैल: नाचसम्बन्धी सम्पूर्ण परम्परागत पूजाआजा विधिविधान यहीबाट चलाउने गरिन्छ । अर्कोतर्फ प्राय: काठमाडौं, भक्तपुर, ललितपुर आदि ठाउँमा हेर्ने हो भने पनि लायक्‌ बस्तीको बीचमा बनाइएको र यसलाई आधार मानेर थथ्व (माथिल्लो) र क्वथ्व (तल्लो) ठाउँ भनेर छुट्टयाइएको पाईन्छ । यस हिसाबले हेर्दा लायक्‌ दिगुटोलदेखि क्वलाखुको झन्डै बीचमा अवस्थित छ र यससँग जोडिएको टोललाई दथु (बीचको)टोल भन्ने गरेको पाइन्छ । यसबाट लायक्‌ रहेको स्थानदेखि तल र माथी (अथात् नेवारी भाषावाट क्वय् र च्वय्) गरी दुईटा टोल हुनुपर्ने देखिन्छ । विभिन्न तमसुकहरूको अध्ययनबाट क्वथतोल, दथ्वतोल र थथ्वतोलको उल्लेख भएको भेटिन्छ । (हे. परिशिष्ट क) ती स्थानहरू मध्ये क्वथतोल र थँथ्वतोलले हालको कुन ठाउँलाई जनाउँछ स्पष्ट नभए पनि तमसुकमा उल्लेख भएका चारकिला र स्थानीय थर आदिको विश्लेषण गर्दा क्वथ्वतोल हालको मरुटोल पूर्वतिरको क्षेत्र र थथ्वतोल हालको इनायलाछि तिरको क्षेत्र रहेको बुझिन्छ । साथै यी टोलहरूको उल्लेख ६००-७०० को समयमा अधिक प्रयोगमा रहेको देखिन्छ ।

५३. नेवार संस्कारमा कोही व्यक्तिको घर बाहिर मृत्यु भएमा घरभित्र ल्याउनु हुँदैन । भन्ने मान्यताअनुरूप बस्तीभित्र वा घरभित्र नल्याइकन सिधै मसानमै लगिन्छ र मृत्यु संस्कारको क्रममा गर्नुपर्ने प्रक्रियालाई मसानभन्दा अलि वर नै सम्पन्न गरिन्छ ।

### ऐ) देय्बौको मार्ग

बिस्का जात्राको पूर्व सन्ध्यामा (पाहाँ चऱ्हेको दिन) थिमिमा देय्बौ राख्ने चलन छ । जात्रापर्वको समयमा भूतप्रेतजस्ता अनिष्टकारी तत्वहरूले बस्ती प्रवेश गरेर बाधा विघ्न गर्न नपाओस् भन्ने हेतुले ती तत्वहरूलाई शान्त पार्न बस्ती वरिपरि त्यसरी देयबौ राख्ने गरिन्छ । अध्ययनको क्रममा उक्त देय्बौ राख्ने स्थान र मार्ग क्वलाखुदेखि दुईपोखरीसम्मको क्षेत्रभित्र पर्दछ । यसले थिमिको उद्गम क्षेत्रलाई स्पष्ट गर्दछ ।

### ओ) प्रमुख ऐतिहासिक एवं सांस्कृतिक केन्द्रको अवस्थिति

अगाडि पनि उल्लेख गरी सकिएको छ कि थिमिको इतिहास अध्ययन र अनुसन्धानको क्रममा यहाँका प्रमुख धार्मिक, सांस्कृतिक एवं ऐतिहासिक केन्द्रको रूपमा रहेका बालकुमारी, सिभाटोल, दिगुटोल, लाय्कू क्षेत्र, लोकेश्वर र थ्याम द्यःको अत्यन्त महत्पूर्ण भूमिका रहन्छ । यहाँको हरेक प्रकारको सांस्कृतिक, ऐतिहासिक र धार्मिक संरचना यिनै केन्द्रहरूसँग सम्बन्धित रहेको छ । अर्कोतर्फ यी केन्द्रहरूको निर्माण थिमिको प्रारम्भतिर नै भइसकेको तथ्य माथि पनि गइसकेको छ । तसर्थ यी केन्द्रहरूको अवस्थितिले समग्र थिमिको प्राचीनता र उद्गम स्थललाई ईंगित गर्दछ । अध्ययनबाट यी सबै केन्द्रहरूको अवस्थिति बालकुमारीदेखि दिगुटोलसम्मको क्षेत्रमा छरिएर रहेको छ । थ्याम दिगुद्यः चपाचोको सुंगापुखूटोलमा रहेको भएपनि यो केन्द्र थिमि क्षेत्रको पुरानो दिगुपूजा (दिवाली) केन्द्र भएकोले चपाचोक्षेत्र प्रारम्भतिर बस्ती नरहेको थप प्रष्ट हुन्छ ।

माथिका सम्पूर्ण बुँदागत विश्लेषण र विवेचनाको आधारमा क्वालखु र दिगुटोल बीचको क्षेत्र प्रारम्भिक बस्तीको रूपमा रहेको स्पष्ट हुन्छ भने यस वरपरका क्षेत्रहरू जग्गा जमीनको रूपमा थिमिअन्तर्गत रहेको पनि थाहा हुन्छ ।

## ४.३ लिखित सामग्री आधार

विविध सांस्कृतिक पक्षको विश्लेषणबाट थिमिको उद्गम क्षेत्रबारे स्पष्ट जानकारी मिल्दछ यद्यपि यसबाट चपाचो, भुलांखेल जस्ता वरपरका क्षेत्रहरूको

बारेमा केही अनुमान गर्न मिल्नेसम्मको सङ्केत भन्दा बढी जानकारी प्राप्त भएको देखिदैन । तर विभिन्न लिखित समाग्रीहरूको अध्ययनबाट ती र ती बाहेकका अन्य क्षेत्रको समेत राम्रो चित्रण पाइन्छ । यसभन्दा अगाडि सांस्कृतिक पक्षको विश्लेषण कै सिलसिलामा देखिएको नगदेश र थिमि बीचको सम्बन्ध र नगदेशको बस्ती विस्तार सम्बन्धमा केही चर्चा गर्नु बेस होला ।

बस्ती विस्तारसँगै थिमिको परम्परागत बस्ती क्षेत्रले वृहत् आकार ग्रहण गर्ने क्रममा विकसित भएको नगदेश मध्यकालमा थिमि कै एक उपनगरको रूपमा रहेको देखिन्छ । किंवदन्ती अनुसार त्यस समय थिमिमा लायक्‌ू (हालको आदर्श माध्यमिक विद्यालय) बनाउन छानिएको स्थानमा बस्ती बसिसकेको रहेछ । त्यसैले ती बासिन्दाहरूलाई उठाउने क्रममा वैकल्पिक स्थानको रूपमा हालको नगदेशलाई प्रदान गरेपछि ती बासिन्दाहरू त्यहाँ बस्न राजी त भए तर आफ्नै पुर्ख्यौली बासस्थान त्याग्न अप्ठ्यारो मानेकोले बालकुमारीको पिखालखु मानिने श्री सिद्धिगणेशलाई पुर्ख्यौली चिनोको रूपमा प्रदान गर्नुका साथै उनीहरूले परम्परादेखि चलाई आएको गुँसि छ्वयेकेगु कार्य [५४] लाई निरन्तरता दिन पनि स्वीकृति दिए ।[५५] यसको साथै सिद्धि गणेशको उपस्थिति पछि मात्र परम्परागत बिस्का जात्रा शुरु गर्ने बाचा समेत गरिए ।[५६] तर यस किंवदन्तीलाई पुष्टि गर्ने तिनै सांस्कृतिक आधार बाहेक थप कुनै प्रकारका लिखित सामग्री भने हालसम्म प्राप्त भएको पाइँदैन तथापि विद्यमान विभिन्न परम्परागत चलनले उक्त किंवदन्तीलाई नकार्न सकिने स्थिति पनि देखिँदैन ।

थिमिसँगै सम्बन्धित रहेको अर्को संस्कृति हो पुलुकिसि जात्रा । यस जात्रा थिमिमा भिंद्वादसीको दिन मनाइन्छ भने नगदेशमा यसको भोलिपल्ट अर्थात् त्रयोदशीको दिन सम्पन्न हुन्छ । छुट्टाछुट्टै दिन र स्थानमा सम्पन्न हुने थिमि र नगदेशको उक्त जात्रा थिमिकै ब्रह्मननि बस्ने बाजेबाट सम्पन्न हुन्छ

५४. प्रत्येक टोल वा घरमा आ-आफ्नो पिखालखुमा शिवरात्रीमा जस्तै दाउरा बाली पूजा गरेर समयबजि बाँडी खाने चलनलाई गुँसि छ्वयेकेगु भनिन्छ ।

५५. विगत ४ वर्षदेखि यो (गुँसि छ्वयेकेगु) कार्य पनि रोकिन गएको छ ।

५६. किंवदन्तीमा उल्लेख गरिएका उक्त परम्परागत चलनको निरन्तरता कायमै रहे पनि विगत दुई चार वर्ष यतादेखि यो परम्परा रोकिन गएको छ ।

भने माधवनारायण पनि थिमिबाटै लगिन्छ ।

माथि चर्चा गरे अनुसार नगदेशका कोही व्यक्तिको मृत्यु भएको खण्डमा दाह संस्कारको लागि नगदेशदेखि थिमिको दक्षिण सिमानामा पर्ने दुईदिप (मसान)मा लगिन्छ । दाह संस्कारको लागि खोलाकै तीरलाई रोजेको हो भने हनुमति भन्दा नजिक मनमति रहेको छ तर झण्डै २ कि.मि. लामो बाटो हिड्नु पर्ने गरी दुईदिप नै लानुपर्ने चितबुझ्दो कुनै कारण देखिंदैन । तसर्थ यसबाट नगदेशबासी थिमिकै बासिन्दा रहेको र नगदेश थिमिको विस्तारित बस्तीको रूपमा रहेको देखिन्छ । तर किंवदन्ती अनुसार लायकू ( हालको आ.मा.वि.) निर्माणको क्रममा उठाएको भन्ने कुरासँग सहमत हुनेसक्ने सन्तोषजनक विश्लेषण भने अझैपनि खट्किएकै छ किनभने लायकू निर्माणको समय किटान गर्न नसकेतापनि यससँग जोडिएका विभिन्न सांस्कृतिक र ऐतिहासिक पक्षको अध्ययनबाट यसको निर्माण नेसं ७०० भन्दा धेरै अगाडि भएको देखिन्छ भने इनाय टोलसम्म मात्रै त्यति बेला बस्ती थिए । अरू उत्तरतिरका चपाचो, भुलांखेल आदि क्षेत्र नेसं ७०० सय पछिबाट मात्रै विस्तार भएको पुष्टि भइसकेको छ अर्कोतर्फ नगदेशबाट प्राप्त सामग्रीको अध्ययनले पनि नगदेश नेसं ७९४ भन्दा अगाडिनै बस्तीको रूपमा रहेको देखाउँछ । किंवदन्तीलाई केहि हदसम्म सहि मान्दा लायकू निर्माणको समयमा दिगुटोलदेखि उत्तरतिरको चपाचो, भुलांखेल, बाहाखा आदि क्षेत्र सम्भवतः खाली हुँदाहुँदै त्यति टाढा लगेर बस्ती बसाल्नु पर्ने कुनै कारण देखिंदैन । जात कै आधारमा त्यती टाढा राखेको भनौ भने चपाचो, पोबु र दिगुटोल क्षेत्रमा यिनीहरूको सहजाति प्रजापति, भासिमा आदिको घना बस्ती रहेको छ । थिमिका प्रजापति, भासिमा र नगदेशका ज्यापुहरू सम्बोधनको विशेषणले भिन्न देखिएपनि यिनीहरू बीच चल्ने गरेका बिहावारी सम्बन्ध लगायत अन्य चाडपर्व र रितिरिवाजहरूको मूलभूत एकरूपताले यिनीहरू एउटै समुदाय अन्तगर्त रहेको पुष्टि हुन्छ । यद्यपि थिमिका प्रजापतिहरू आफूलाई प्रजापति भन्न रुचाउँछन् भने नगदेशका ती समुदाय आफूहरू ज्यापु भएकैमा गर्व गर्छन् । यसरी एउटै समुदायका व्यक्तिहरू दिगुटोलसम्म रहेका छन् भने

तिनीहरू मात्रै नगदेशसम्म पुग्नुपर्ने देखिंदैन । त्यस्तैगरी नगदेशका आदिवासीको रूपमा ज्यापु जातिहरूलाई लिइन्छ जबकि थिमिको लायक्‌ू क्षेत्रमा कुनै प्रकारको ज्यापु जातिको बस्ती रहेको वा त्यस नजिकसम्म पनि यिनीहरूको जातिको उपस्थिति नरहेबाट पनि उक्त किंवदन्तीलाई निर्विवाद स्वीकार्न मिल्ने देखिंदैन । तसर्थ वहुप्रचारित र धेरै जसोले स्वीकार्दै व्याख्या गर्ने गरेको भएतापनि उल्लिखित अन्योलपूर्ण कुराहरूलाई प्रष्ट्याउने कुनै बलियो प्रमाण फेला पर्न नसकिएकोले उक्त किंवदन्ती निःसन्देह स्वीकार्य देखिंदैन । तर मृत्यु संस्कार र बिस्का जात्रामा लाय्‌कूसँगको सम्बन्धको आधारमा कुनै समय यो बस्ती मल्लकालमा पूर्णतः थिमि कै विस्तारित उपनगरको रूपमा विकास भएको देखिन्छ । यद्यपि सो बस्ती स्थानान्तरणको क्रममा चपाचो, बाहाखा, भुलांखेल आदि नजिकका ठाउँलाई छोडेर त्यति टाढा किन पुगे भन्ने जिज्ञासा खोजमूलक छ ।

माथि चर्चा गरिएका विभिन्न सांस्कृतिक पक्षहरूबाट थिमिको उद्‌गम स्थल सम्बन्धमा अनुमान गर्ने थुप्रै आधार प्रदान गर्दछ भने लिखित सामग्रीहरूले त्यसलाई थप स्पष्ट र पुष्टि गर्दछ । जसको आधारमा बस्ती विस्तारको क्रममा विकास भएका वरपरका थुप्रै अन्य बस्ती र क्षेत्रको चित्राङ्कन समेत गर्न सकिन्छ ।

झण्डै ११० को सङ्‌ख्यामा विभिन्न मन्दिर, चैत्य, पाटी आदिमा प्रतिस्थापित गरिएका शिलापत्रहरू दुईतिहाइ जति नेसं ८०० अगाडिको रहेका छन् । यसरी पाइएका नेसं ८०० सम्मका मध्ये नेसं ७०० सम्मका प्रायः सबै शिलालेखहरू दिगुटोलदेखि क्वलाखुसम्मको क्षेत्रमा पाइएका छन् र यो भन्दा बाहिरका स्थानहरू भुलांखेल, चोदे, चपाचोमा रहेका अधिकांश शिलालेखहरू नेसं ७००-८०० का रहेका छन् । यसबाट यी क्षेत्रहरू ७०० पछिबाट विस्तार भएको पाइन्छ । नेसं ७५२ को तमसुकमा "..........*नेकटोलकाधिवासित ग्राहक उथान भारो*..........." भनेर नकटोलको उल्लेख भएबाट नेसं ७०० तिर नै भुलांखेल क्षेत्र आवाद भइसकेको देखिन्छ भने नेसं ८६८, ८७३, ८७५ का शिलालेखहरूको प्राप्ती र नेसं ८१२, ८०५, ८३१ को तमसुकमा उक्त टोलको उल्लेखले नेसं ८०० तिर यस क्षेत्रको तिव्र विस्तारलाई ईंगित गर्दछ ।[५७]

५७. भुलांखेलको नासःद्यः (नृत्यनाथ) मन्दिर स्थानीय न(क)टोलका मिलेर बनाएको भन्ने विवरण सहितको उक्त मन्दिरको शिलालेखमा उल्लिखित नकटोलले हालको भुलांखेल क्षेत्रलाई सङ्केत गर्दछ ।

त्यस्तै नेसं ७६१ का[५८] तमसुकमा चपाचो टोलको उल्लेख भइसकेकोले नेसं ७०० तिर नै चपाचो पनि आवाद हुन थालेको देखिन्छ। नेसं ७७४[५९] मा निर्मित चपाचो गणेश मन्दिर र नेसं ८३१, ७९६[६०] को तमसुकमा चपाचोको उल्लेख भएबाट नेसं ८०० मा यस क्षेत्रको विकासले गति लिएको भन्न सकिन्छ। साथै कुम्हाननि अवस्थित नेसं ७५७ तिर स्थापित विश्वकर्मा मन्दिरले यस समयमा कुम्हाननि, वाचुननि, जंलाननिको समेत विकास हुन थालेको देखिन्छ। यसरी दिगुटोलबाट उत्तरतिरका क्षेत्रहरू भुलांखेल, चपाचो लगायतका क्षेत्रहरू नेसं ७००-८०० तिर नै विस्तारित भइसकेको र नेसं ८०० तिर यसले तिब्रता लिएको पाइन्छ। नेसं ६५०, ७९०, ८२६ का तमसुकहरूमा पोबु, पाचोबु, बाहार्खाबु, जलाखुबु जस्ता स्थानहरूको उल्लेख भएबाट पोबु, पाचो, बाहाखा क्षेत्रहरू नेसं ८०० पछाडि मात्रै विस्तार हुन थालेको देखिन्छ।

थिमिको सिमारेखाभित्र केवल यिनै बस्तीहरूमा मात्रै पर्दैन बरु चोरपुर, बालकोट, सिरुटार, लोकन्थली, सिनामंगल, चर्खण्डी जस्ता वरपरका बस्तीहरू समेत थिमि अन्तर्गतका क्षेत्र भएको देखिन्छ। चोरपुरको हितिडोलको पाटीमा रहेको नेसं ९०० को शिलापत्रमा *"......मध्यपुरीस्थान हितिडोल युलि पाथिमदल प्रिति रलंखकुलदेस ....."*[६१] भन्ने उल्लेख भएबाट चोरपुर थिमि अन्तर्गत नै रहेको बुझिन्छ। यसरी नै सिनामंगलको गणेश मन्दिर थिमि छाकटोल (?) का श्री कृष्ण माकर पुत्र सिंघहनसि माकलका दुई बाबुछोरा मिलेर प्रतिस्थापन गरेको कुरा सोही मन्दिरको शिलालेखमा उल्लेख छ।[६२] बालकोट, सिरुटार क्षेत्रको अध्ययन गर्दा, यी क्षेत्रका जग्गाहरू पुर्ख्यौलीदेखि

५८. शङ्करमान राजवंशी - भूमिसम्बन्धी तमसुक-ताडपत्र ४। काठमाडौं : पुरातत्व विभाग (विसं २०४४) पृ. १२।

५९. शङ्करमान राजवंशी - भक्तपुर शिलालेख सूची। काठमाडौं : वीर पुस्तकालय : विसं २०२०, पृ. ५४।

६०. शङ्करमान राजवंशी - भूमिसम्बन्धी तमसुक-ताडपत्र ४। काठमाडौं : पुरातत्व विभाग (विसं २०४४), पृ. १७, २२।

६१. शङ्करमान राजवंशी - भक्तपुर शिलालेख सूची। काठमाडौं : वीर पुस्तकालय : विसं २०२०, पृ. १२७।

६२. शङ्करमान राजवंशी - भक्तपुर शिलालेख सूची। काठमाडौं : वीर पुस्तकालय : विसं २०२०, पृ. १२७।

थिमिका बासिन्दाहरूको रहेको र यहाँका बासिन्दाहरू समेत थिमिबाट नै सर्दै त्यहाँ पुगेको कुरा स्थानीय बासिन्दाहरूसँगको कुराकानीबाट थाहा पाइन्छ। छलफलको क्रममा तिनीहरूको पुर्ख्यौली थिमि नै भए पनि खेतीको सिलसिलामा हनुमति खोला वारपार गर्न वर्षाको समयमा नसकिने र घरदेखि जग्गा निकै टाढा भएपछि खेती कै लागि बसाइ सर्दै ती स्थानहरूमा पुगेको जानकारी मिल्दछ। यसको साथै चर्खण्डी बिस्का जात्रा संचालनार्थ स्थानीय व्यक्तिहरू मिलेर तयार पारेको नेसं १०३४ को सम्झौता पत्र फेला परेको छ।[६३] पत्रमा उल्लिखित व्यहोराको केही अंश प्रकार रहेको छ *"श्री गणेशायन ॥ श्री भैरवाय नमः ॥ श्री बालकुमारी नमः ॥ शुभ सम्वत् १९६० साल फाल्गुन २६ गते रोज ५ मा बदीने लीषीतम् ठीमीका अम्वल मध्ये चक्रतीर्थ गाउँ बस्ने हामी तपसिल बमोजिमका ........-"*। यसले चर्खण्डी गाउँका बासिन्दाहरू थिमिबाटै बसाइ सर्ने क्रममा त्यहाँ पुगेको पुष्टि हुन्छ।

यसप्रकार थिमिको नक्शाङ्कन गर्नुपर्दा पूर्वतिर यसको सिमाना भक्तपुरको सल्लाघारी सिमानादेखि पश्चिम र दक्षिणतिर क्रमशः काठमाडौं र पाटनको लुभुसम्म यसको सिमाना फैलिएको थियो।

अध्ययनको क्रममा थिमिको प्रभावक्षेत्र अझ व्यापक देखिन्छ। जसको आधारमा थिमिलाई वृहत्तर थिमि भन्न सकिन्छ। सांस्कृतिक पक्षको विश्लेषण र विवेचनाको साथसाथै विभिन्न स्थानमा पाइएका शिलापत्रहरूले पनि यसलाई थप पुष्टि गर्दछ। थिमिको बालकुमारी मन्दिरको प्राङ्गणबाट श्री बालकुमारीको नेतृत्वमा शुरु हुने वैशाख २ गतेको बिस्का जात्रामा बोदे, नगदेश, तिगनि, हिँचो समेतबाट देवीदेवताका खतहरू ल्याई सहभागी हुने गर्दछ। त्यस्तै जुगाको दिनमा थिमिको दीपंकरहरू बोदे, तिगनिसम्म पुगेर पूजा थाप्ने गर्दछन्। त्यस्तै भक्तपुरको नवदुर्गा विभिन्न ऐतिहासिक नगरमा पुगेर पूजा थाप्ने प्रचलन अनुसार थिमिमा आई बस्ने र यहींबाट बोदे, तिगनिसम्म पुगेर पूजा थाप्दछन्। यी परम्पराहरूले थिमिको सांस्कृतिक

६३. रत्न सायमि - चरखण्डी (चर्खुंतीर्थ) बिस्केट जात्रा। दधिकोट : चर्खु प्रकाश समूह : विसं २०६० : पृ. २९।

प्रभावलाई प्रष्ट्याउँछ । यसबाहेक विभिन्न स्थानमा पाइएका शिलालेखहरूमा उल्लिखित विवरणहरूले पनि यसको प्रभाव क्षेत्रलाई बलियो आधार प्रदान गर्दछ । ईदे (सरस्वती खेल), नीलबाराही आदि स्थानमा पाइएका शिलालेखहरूमा "........*बालकुमारी देवी सन्निधाने* ........." भन्ने वाक्यांश उल्लेख भएको पाइन्छ । त्यस्तै ईदेको सरस्वती मन्दिरमा रहेको एउटा शिलालेखमा उक्त मन्दिर थिमि चपाचो टोलमा बस्ने कल्याण थापा भारोका सपरिवार मिलेर एवं सँगैको ढुंगेधारो उनैका छोरा रामचन्द्र थापा भारोका सपरिवार मिलेर क्रमश: नेसं ८७३ र ८७६ मा निर्माण गरेको उल्लेख छ ।[६४] थिमिका साहु खलकहरूले पनि चाँगुनारायण प्राङ्गणमा पाटी निर्माण गराएको पाइन्छ भने प्रत्येक वर्ष लायकूबाट यहाँ पूजा चढाउने परम्परा पनि यद्यावधि छँदैछ ।

यसप्रकार थिमिको ऐतिहासिक व्यापकताको अध्ययनको क्रममा लिच्छविकालमै थिमिको अस्तित्व प्रष्ट भएपनि यसको सीमाङ्कन सम्बन्धमा भने ठोस जानकारी मिल्दैन । तर मल्लकालमा आएर यसबारे नक्साङ्कन समेत गर्न सकिन्छ । जसअनुसार प्रारम्भतिर थिमि बस्ती केवल क्वलाखु र दिगुटोल बीचको क्षेत्रमा सीमित थियो भने नेसं ७००-९०० को अवधिसम्ममा यसको विस्तार भएर छेउछाउका चपाचो, बाहाखा, भुलांखेल, पोबु, नगदेश समेतको विकास भएको पाइन्छ । विस्तारकै क्रममा हालका चोरपुर, निकोसेरा, नगदेश, सानोठिमी, सिनामंगल, लोहँकिन्थली, बालकोट, सिरुटार, चर्खन्डी जस्ता क्षेत्रहरू समेत तात्कालीन वृहत्तर थिमिअन्तर्गत नै रहेको बुझिन्छ भने यसको सांस्कृतिक प्रभाव अझ वृहत्तर हुँदै बोदे, तिगनि, इदे, गुँडुसम्म फैलिएको पाइन्छ ।

००००००

६४ छत्रबहादुर कायस्थ - थिमि देयया पुलांगु म्ये । मध्यपुर : मध्यपुर क्षेत्र विकास मञ्च : विसं २०५५, पृ ६८ ।

अध्याय-पाँच

# सम्पदा सूची

थिमि नगरको ऐतिहासिक पृष्ठभूमिबारे अघिल्ला एकाइहरूमा विस्तृत चर्चा भइसकेको छ । यिनै ऐतिहासिक महत्वले थिमि नगरलाई अनुसन्धानमूलक र विशिष्ट नगरको रूपमा परिचित बनाएको छ । यहाँको बत्तीस खतको बिस्का जात्रा, पुलुकिसि नाच, महाकाली नाच, इन्द्र अप्सरा नाच, भैरव नाच, जिब्रो छेड्ने जात्राजस्ता अत्यन्त रोमाञ्चक संस्कृति र नगरभरि छरिएर रहेका मन्दिर पाटी, ध्वाका (स्वागतद्वार), डबली, अष्टमातृका, ढुङ्गेधारा आदि ऐतिहासिक कलाकृतिले वास्तवमै नगरको गौरव बढाएको छ । यी सम्पदाहरूको संरक्षण, सम्वर्द्धन र प्रवर्द्धन गर्न सकेमा थिमि नगरलाई उपत्यकाको अर्को प्रमुख पर्यटकीय गन्तव्य नगरको रूपमा विकास गर्न सकिन्छ । तर विडम्बना नै भन्नु पर्दछ, यति महत्व र सम्भावना बोकेको यस नगरको सम्पदाहरूको उचित सम्भार हुन सकिरहेको देखिंदैन *"हाम्रो कला हाम्रो संस्कृति, मध्यपुर थिमि हाम्रो सम्पति"*को नारा अघि सारेर परिचित बन्न खोजिरहेको नगरपालिकाको प्राथमिकतामा यी सम्पदाहरू सूचीकृत भई संरक्षण र प्रवर्द्धन हुन नसक्नु निश्चय पनि दुःखलाग्दो विषय हो । फलतः थुप्रै सांस्कृतिक महत्वका नाच, संस्कृति लोप हुने तरखरमा छन् भने कुनै-कुनै त हराइ पनि सकेका छन् । कतिपय संस्कृति, परम्परागत नाचहरू आर्थिक समस्याले चल्न सकेको पाईंदैन भने ध्वाका, डबली, पाटी, मन्दिरजस्ता सम्पदाहरू अदूरदर्शिता कै कारण नष्ट र अस्तव्यस्त अवस्थामा रहेका छन् । ऐतिहासिक कालमा बस्तीको चारैतिर बनाइएका मध्ये तीन वटा ध्वाकाहरू गाडी भित्र्याउनका लागि भत्काएको थियो भने विकासको

